# १. पीपलको रूख

हिन्दूहरूले बर पीपललाई पूजा गर्छन् - किन ? यसको कारण यसको गुणलाई हो ।

१. **कामोत्तेजितको लागि-** पीपलको जराको बोक्रा दुइ तोला र ८-१०वटा पीपलको पातको बीचमा हुने डुकु (मुन्टो) दूधमा पकाएर चीनी मिलाएर खाने गरे बूढो पनि जवानको समान हुन्छ ।

२. **यसको ताजा बोक्रा-** कुटेर १२ घण्टा चिसो पानीमा भिजाएर माडेर कपड्छान गरी पिउने गरे कम्मर दुख्ने रोग जाती हुन्छ । साथै, यसले शीघ्रपतन, मूत्ररोग, स्वप्नरोष, चर्मरोग (छालाको रोग) सबैमा लाभ गर्छ ।

३. **बोक्रा अथवा जराको बोक्राको क्वाथ-** (पानीमा पिसेको) कपड़छान गरी पिउनाले पिसाब पोल्ने, पुरानो सुजाक, प्रमेह, हड्डीको जलन, कुकुर खोकी, चिलाउने रोग, दाग़ आदिमा लाभ गर्छ ।

४. **छाद्ने र बाडुलीमा-** सुकेको बोक्रा जलाएर झरिलो आगो बनाई चिसो पानी आठ गुणामा इवांइँ पारेर घरि-घरि अलि-अलि खुवाउनाले बाडुली लागेको र गर्भवतीको उल्टीमा लाभ गर्छ ।

५. **भुँड़ीको खराबीले-** गर्दा जे खायो छाद्छ भने छाँयामा सुकाएको बोक्राको भित्री भाग कुटेर चूर्ण बनाई महमा मिलाएर घरि घरि चाट्नू । पित्तको कारणले भएको छाद्ने रोग पनि जाती गर्छ । (नोट- मह माउरीको होस्) ।

६. **बाडुलीमा-** पीपलको हाँगो डढाएर खरानी पानीमा घोलेर कपड़छान गरी घरि-घरि अलिअलि खानाले पनि लाभ गर्छ ।

७. **पित्त-विकार-** भएर सुनिएकोमा अथवा कुनै जन्तुले टोकेकोमा सुनिएको भए बोक्रा घीउमा घोटेर लगाउनू ।

८. **हनुग्रह रोगमा-** यो रोगमा मुख आँको आँ नै हुन्छ अथवा बन्द भएको बन्द नै रहन्छ । यो रोगमा पीपलको बोक्राको भित्री भाग

कुटेर मुखमा अलि अलि रस चुवाउनू ।

९. **आगोले पोलेकोमा-** फोका फुटेकोमा यसको पाउडर (बोक्राको) बनाएर छर्किदिनू अथवा घीउमा मिलाएर लगाए फोका हराएर घाउलाई बसेक गर्छ ।

१०. **पशुहरूलाई घाउ-** भएर कीरा परेकोमा बोक्रा कुटेर रोटीमा डल्लो पारेर खुवाउने गरे घाउ निको हुन्छ ।

११. **दाँतको रोगमा-** बोक्राको पाउडर बनाएर मल्ने गरे दाँत हल्लिनु र दुख्नु जाती हुन्छ । यसको रसले कुल्ला गरे पनि हुन्छ ।

१२. **चर्मरोग दाद, घाउ खटिरा, लूतोमा-** यसको पात अथवा जराको चूर्ण बनाएर नरिवलको तेलमा फिटेर मलहम बनाएर लगाए शरीरका सारा रोगहरू हराउँछन् ।

१३ **स्मरण-शक्ति-** कमजोर भए बोक्रा छाँयामा सुकाएर कुटेर पाउडर बनाई चार आना भरदेखि एक तोलासम्म २० तोला पानीमा पकाउनू, आधा पानी रहेपछि छानेर दूध र मिश्री अथवा चीनीमा मिलाएर सँधै बिहान-बिहान खाने गरे स्मरण शक्तिमा वृद्धि हुन्छ ।

१४. **मासिक धर्म-** नहुँदा अथवा कष्टले हुँदा यसको बोक्रा र इमली-को बोक्रा बराबर मिलाएर कुटी अथवा पानीमा पिंधेर खाने गरे मासिक धर्म सुचारु रूपले हुन्छ ।

१५. **गर्भस्त्रावको शंका-** भए पीपलको बोक्रा र सन्तलाको बोक्रा अथवा ज्यामीरको बोक्रा मिलाएर कुटेर आधा तोलाको खुराक बनाई खाने गर्नू ।

१६. **केटाकेटीको मुख-** पाकेकोमा पाउडर बनाई महमा मिलाएर लगाइदिने गर्नू ।

१७. **गर्भ धारणार्थ-** प्रत्येक दिन ताजा कलिलो पात र जटा अथवा जरा दुइ तोला खस्रो कुटेर ४० तोला दूधमा पकाउनू, २० तोला रहेपछि छानेर मह र मिश्री अथवा चीनी मिलाएर फिट्नू,

मनतातो भएपछि पिउनू । यसरी महीनावारी हुनुभन्दा ५-६ दिन अघिदेखि शुरू गरेर १० दिनसम्म फेर नपारी खानू, गर्भको सम्भावना हुन्छ । यसरी पीपलको फल १०० ग्राम भए पनि पाक (खीर) बनाएर खाए हुन्छ, तर योनिमा कुनै अरू रोग भए पहिला त्यसको उपचार गर्नु आवश्यक छ । आजकल गर्भ रहेन भनेर डाक्टर-कहाँ जाने चलन छ, तर डाक्टरले किउरेट सिवाय अर्को उपाय गर्दैनन् ।

१८. **पीपलको जटा-** दुइ भाग, हात्तीको दाँतको चूर्ण (पाउडर) एक भाग यी दुइवटा मिलाएर स्त्री मासिक धर्म भएपछि चार दिनमा नुहाएर त्यस दिन बेलुकीदेखि चार-चार आना भरी चूर्ण गाईको दूधसँग सात दिन सेवन गर्नू । त्यसपछि गर्भ-धारण भएको लक्षण नभए फेरि दोस्रो महीना पनि यसरी नै खाने गरे गर्भ रहन्छ ।

१९. **पीपलको जटा-** रातो सक्कर मिलाएर राख्नू रजोधर्म हुनासाथ त्यस दिनदेखि ११ दिन खानू, र रजोधर्म भएको ११ दिनमा सम्भोग गर्नू गर्भ रहन्छ ।

२०. पागल भएकोमा अथवा भ्रममा यसको डुकु दश तोला जति दूधमा पकाएर कुराउनी बनाउनू र मिश्री मिलाएर खाने गरे केही दिनमा लाभ गर्छ ।

## २. बरको रूख (बड़)

**यसलाई हिन्दूहरूले पूजा गर्छन्-** यसको कारण हाम्रा ऋषिमुनिहरूले सबैले यसको रक्षा गरून् भनेर हो । जुन चीजले आफूलाई भलो गर्छ भने उही भगवान् हो भन्नमा अत्युक्ति नहोला ।

### गुणहरू

१. **श्वेत प्रदर-**(योनिबाट सेतो पहेंलो पदार्थ निक्लनु) गर्भ-स्राव (गर्भपात) मा यसको बोक्राको क्वाथ, कल्क १२ तोलादेखि ५ तोलासम्म र लोधको कल्क चार आना भरी मिलाएर त्यसमा

अलिकति मह (मौरीको) पानीमा मिलाएर दिनमा दुइपल्ट दिनाले लाभ गर्छ ।

योनि-स्राव बेसी भएमा बोक्राको रसमा नरम लुगा भिजाएर सुकाई योनिमा धारण गर्नू । यसमा लोध मिलाउन नसके बरको बोक्राको रस मात्र भए पनि काममा लगाउन सकिन्छ ।

२. **गर्भपातमा-** बरको बोक्राको चूर्ण बनाएर चार-चार आना भरीको खुराक बनाई गाईको महीसँग खानू ।

३. **योनिको घाउमा-** यसको बोक्रा डढाएको तेल लगाउनू ।

४. **प्रमेह (मधुमेह)मा-** डाइबेटिजमा छाँयामा सुकाएको यसको बोक्राको चूर्ण बनाएर मिश्रीमा मिलाएर चार आना भरीको खुराक बनाई बिहान-बेलुकी खानू । अथवा खस्रो कुटेको बोक्रा १२ तोला पानीमा हालेर पकाउनू, २ तोला अथवा ४ तोला रहेपछि निकालेर कपड़छान गरी चिसो भएपछि खानू । यसरी ४० दिन पथ्यपूर्वक खानाले डाइबेटिजको रोगीलाई लाभ गर्छ ।

५. **जोरो, पखालो अथवा वातज अर्शमा-** ( जरोसँग पखालो) वातज बबासिरमा अथवा मौसमी जरोमा १ तोला बोक्रा कुटेर ४० तोला पानीमा पकाउनू, ८।१० तोला रहेपछि छानेर १ आनी भरी नून मिलाएर पिउनू, यसरी दिनमा तीनपल्ट चिया झैं गरम-गरम पिउनाले लाभ गर्छ ।

६. **पखालोमा-** जरा अथवा बोक्राको चूर्ण ४ आना भरी चामलको चौमालीसँग दिनमा ३ पल्ट खाने गरे पखालो थामिन्छ ।

७. **स्मरण-शक्ति-** कमजोर भएकोमा बरको बोक्रा छाँयामा सुकाएर चूर्ण बनाएर त्यसको डबल चीनी अथवा मिश्रीमा मिलाएर सधैँ बिहान-बेलुकी आधा तोलाको मात्रा बनाएर दूधसँग खाने गरे स्मरण-शक्ति वृद्धि हुन्छ ।

८. **दाँतको कीरामा -** बोक्राको क्वाथले दिनहुँ धोए अथवा २।४ थोपा बरको दूध चुवाएमा कीरा नष्ट हुन्छ ।

९. **वीर्यको पतलापनमा-** यसको दूध बिहान घाम झुल्कनुभन्दा पहिला, पहिला दिनमा दश थोपा बतासामा चार आना भरी चीनी मिलाएर खानू । यसरी दिनहुँ ११-१२-१३ गर्दै एक-एक थोपा बढ़ाउँदै बीस दिनसम्म खाई बीसवाँ दिनमा तीस थोपा हुन्छ, बीसवाँ दिनदेखि फेरि १ थोपा घटाउँदै जानू र पहिलाको मात्रा १० थोपासम्म खाएर बन्द गर्नू फेरि नखानू ।

१०. **नेत्र-विकारमा-** मोतियाबिन्द (आँखामा सेतो थोपा-थोपा हुने रोग) को पहिलो अवस्थामा सलाई (सलाका)ले यसको सुर्मा लगाउनाले दिनहुँ लगाउने गरे लाभ गर्छ । चाँडै फुलो नष्ट गर्छ ।

११. **आँखाको फुलोमा-** यसरी बरको दूध र देशी शुद्ध कपूर मिलाएर सुर्मा झैं लगाउने गरे चाँडै फुलो नष्ट गर्छ ।

१२. **पखालोमा-** बरको दूध नाइटोमा भरिदिनू, छेउ-छेउमा पनि लगाइदिए पखालो थामिन्छ ।

१३. **बरको दूध-** कानमा लगाउनाले कानको फोका र कानमा कीरा परेकोमा लाभ गर्छ ।

१४. **कुष्टरोग-** घाउमा यसको दूध लेप गर्नू, बोक्रा कुटेर बाँध्नू, हड्डीसम्म पुगेको घाउ पनि जाती हुन्छ ।

१५. **गठियामा-** मर्केकोमा यसको दूध लगाउनाले लाभ गर्छ ।

१६. **सुजाकमा-** बरको डुकुको हिम पिउनू (हिम पिउनू भनेको कुटेर चिसो पानीमा भिजाएर राखेको पानी बिहान छानेर पिउनू ।)

१७. **मासिक धर्म-** बेसी भएमा अथवा नाकबाट खून बेसी आए यसको डुकुको रस महीमा अथवा हिम बनाएर खानू ।

१८. **गर्भधारण गर्नुमा-** गाईको गोठमा उम्रेको बरको चूर्ण अथवा उत्तर दिशापट्टिको जरा बढिया कालो दाल अथवा सेतो तोरी दुइ दानासँग पुष्य नक्षत्रमा पिउनू । (यो चरकको अध्याय ८ मा लेखेको ।)

१९. **गर्भस्त्रावमा-** दुइवटा डुकुलाई (पातको बीचको) २० तोला दूधमा

पकाउनू, जति दूध छ उति पानी मिलाएर सुकाएर दूध मात्र रहेपछि छानेर खानू ।

२०. **बरको छाँयाले**- शीतल दिन्छ । तर राति बरको रूखले फस-फोरस फ्याँक्छ, यसकारण राति बरको रूखमुनि नसुत्नू ।

## ३. माकुरोको जालो

१. **माकुराको जालो**- एक लालगेडी भरी, खाने सोड़ा एक लाल, गुड़ चार आना भरी सबै मिलाएर पिसेर सेवन गर्नाले आँनको जरो जाती हुन्छ ।

२. **विषहर लेप**- बाँदर, कछुवा, कुकुर आदिले टोकेकोमा माकुरोको जालो जम्मा गरेर लगाई बाँधिदिनाले घाउ जाती हुन्छ ।

३. **कृमिहर**- पशुहरूलाई घाउ भएर कीरा परेमा माकुराको जालो रोटीमा पोका पारेर खुवाउनू ।

४. चार-चार दिनमा आउने जरोमा माथि १ नं० मा लेखिए-अनुसार खुवाए जरो जाती हुन्छ ।

## ४. कालो दाल

१. **कालो दालमा**- हिङ र अदुवा मिलाएर मात्र खाए असल हुन्छ ।

२. यसले पुरानो रुघा जाती गर्छ ।

३. **सुठोसँग**- पकाएर खानाले लकुवा, रेड़ीको जरासँग पकाएर खानाले गठियामा (ह्रात खुट्टाको जोड्नी-जोड्नी दुख्नेमा), पानीमा उमालेर खानाले शुक्रमेहमा लाभ गर्छ । कालो दाल हरेक रोगमा लाभ गर्छ, तर अदुवा, हिङ, मरीच नहालेको दालले बादी गर्छ अथवा हानि हुन सक्छ । कालो दालमा घीउ र दूध मिलाएर खानाले पुष्टिकारक हो । खरेटीको जराको रस मिलाएर खाए पक्षाघात, लकुवा रोग जाती हुन्छ । आमवात, कलेजोको दोष आदिमा लगातार खानाले लाभ गर्छ, तर हिङ र अदुवा मिलाउन

भुले बिगार गर्छ, साथै पकाउँदा पहिला नून हाल्नु हुँदैन, पहिल्यै नून हाले दाल पाक्दैन ।

४. **कालो दालको-** बोटको भस्म भातमा मिलाएर खानाले सन्धि (अण्डकोष) को रोग जाती गर्छ ।
यसको धेरै नै गुणहरू छन्, धन्वन्तरि वनौषधिमा पढ्नुहोला । तर निक्खुर कालो दाल धेरै गुणकारी हुन्छ, तर हिंग र अदुवा नहाले लाभ गर्दैन । सबै वर्णन यो सानो पुस्तकमा असम्भव छ ।

## ५. अदुवा

१. **अदुवा-** खाना खानको अघि एक टुक्रा सिधेनून अथवा अरू नून मिलाएर खाने गरे अरुचि रोग हुँदैन । गला जिब्रो सफा हुन्छ, भोक बढ्छ, भुँडीमा पाचन रस बनाउँछ, पखालो, पत्ला टट्टीलाई पनि ठीक गर्छ । खाना खाए-पश्चात् एक टुक्रा अदुवा खाने गरे अरोचक रोग आउँदैन ।

२. **अदुवाको रसमा-** बराबर मौरीको मह मिलाएर खाए श्वास रोग, कफ-विकार, मन्दाग्नि, रुघा, अमन हुने, वातज अण्डवृद्धिमा र कफमा लाभ गर्छ । सास बढ्नेमा पनि लाभ गर्छ ।

३. **कागती-** निम्बूको रसमा अदुवा मिलाएर खानाले पैत्तिक मन्दाग्निमा, सक्खरमा मिलाएर खानाले अजीर्णमा, पुरानो गुँड मिलाएर खानाले खोकीमा, शरीर सुनिएकोमा र जाबेमा मिश्रीसँग मिलाएर खानाले अथवा मह मिलाएर खानाले, कफ रुघामा तुलसीको रस, मह र मुजुरको प्वाँख डढाएको खरानी मिलाएर खानाले छाद्ने रोग सन्चो गर्छ । दूध मिलाएर नाकबाट खुवाए टाउको दुख्नेमा, जुवानो अदुवाको रसमा पिंधेर शरीरमा घस्नाले बातको पीड़ामा, त्रिफला र गुँड़ मिलाएर पिउनाले कमला (खूनकमी) मा; सुठो, मरीच, पिपला, सिधेनून मिलाएर दिनाले सन्निपातमा, र जरो आएको रोगीको घाँटी घरघर गर्नेमा लाभ गर्छ । अदुवाको रस नाकबाट भित्र चुहाउनाले जरोको रोगीको मूर्च्छामा लाभ गर्छ । शरीरको गर्मी जति तातो गरी कानमा टप्काउनाले कान दुख्नु

जाती हुन्छ । अदुवा पिसेर हात- खुट्टामा दल्नाले हातखुट्टा बाउँडिने हराउँछ । यसको साथमा सिधेनून मिलाएर खाने गरे आमवात जाती गर्छ ।

४. **अदुवाको रस-** अदुवाको रस ककसले खानु हुँदैन भने पाण्डुरोग, हातखुट्टा, नङ, आँखा पहेँलो हुने रोगी (जान्डीस), मूत्रकृच्छ्र, पिसाब पोल्ने-रोकिने, जरोमा शरीर पोल्ने, पित्त-प्रकृतिवालालाई यसले हानि गर्छ । उनीहरूले खानु हुँदैन । तर सिधेनून र ज्यामीर निम्बूको रससँग मिलाएर खान सकिन्छ भन्ने धन्वन्तरिको भनाइ छ । अदुवाको रसमा बोतल उमालेर जादूवालाहरूले बोतल चपाउँछन्, तर थुकेर फ्याँकिदिन्छ, यसले बोतल नरम हुन्छ ।

## ६. बुहारीझार (लाजवन्ती)

(यो झार छुँदा छापछुप हुने हुनाले बुहारीझार (लज्जावती) भनिन्छ । यसको मात्रा (खुराक) बीज भए एकदेखि तीन लाल भरी, जरा र पात १ आनीदेखि १॥ आनी भरी अथवा आधा तोलासम्म हो ।

१. **पाकेको आउँ-** (सेतो मासी) भुँड़ी दुख्नेमा यसले इमीटीन हाइड्रोक्लोराइडको काम गर्छ, यसले जादू झैं काम गर्छ । आँतमा मलको गाँठोलाई तोड्नेवाला, टट्टी सफा ल्याउने, पुरानो घाउ, बबासिर, भगन्दर, पिलिया, खून थुक्ने, रक्तपित्त, पित्तजरो, रक्त-प्रदरमा उपयोगी हो ।

२. **घाउमा-** यसको पात अथवा जरा दूधसँग खानू । दिनहुँ यसको प्रयोगले पहिलो हप्तामा पित्त-विकारको सबै प्रकारको जरो हराउँछ । दोस्रो हप्तामा बबासिर, हर्षा, कमला; तेस्रो हप्तामा उपदंश चर्मरोग सबै जाती गर्छ ।

३. **स्तन ढिला भएकोमा-** लज्जावती र अश्वगन्धा पिसेर लगाउनू ।

४. **मूत्रावरोधमा-** पातको क्वाथ पिउनाले मूत्रपथरी आफै टुक्रा टुक्रा भएर निस्कन्छ ।

५. **कुकुर खोकी-** (हुपिङ्ग-कफ) मा लज्जावतीको जरा एक-एक

लाल भरी महमा मिलाएर खाने गरे खोकी निको हुन्छ ।

६. **शीघ्र-पतनमा-** लज्जावतीको बीज दुइ मासा अथवा एक आनी भरी मिश्री आधा तोलासँग बिहान-बेलुकी पन्द्र दिन खानुपर्छ ।

७. **योनिभ्रंशमा-** लज्जावतीको पातको रस अथवा जरा घोटेर लगाई लङ्गौटी लगाउनू । केही दिनमा रोग मुक्त हुन्छ । पुरानो भएको रोगीलाई धेरै दिनको प्रयोगले मात्र जाती हुन्छ ।

८. आधा तोला लज्जावती गोलमरीचसँग पिसेर ५० दिन पिउनाले गण्डमाला, भिरुङ्गी, माईको रोग अथवा धातुमा लाभ गर्छ । गल्फुला, गाँड़, घाँटीमा अमलाको गेड़ा झै निस्कनेलाई गण्डमाला भनिन्छ ।

९. **रक्त अतिसार-** (खून छेर्ने) मा लज्जावतीको जरा चार आनी भरी पिसेर दहीमा फिटेर खाने गरे खून जान बन्द हुन्छ ।

## ७. ज्वरो

१. **ज्वरो-** (जरो) मा आजकल डाक्टरी औषधी दिने चलन छ । यसकारण यहाँ उपचार लामो लेखिबस्ने आवश्यकता देखिदैन । जरो बात, पित्त, कफ त्रिदोष आदि प्रकारको हुन्छ । सबै ज्वरोमा डाक्टरी औषधि र आयुर्वेदिक औषधि एकै ठाउँमा पाइन्छ । तापनि कति जरोमा आयुर्वेदिक वा डाक्टरी औषधिले लाभ गर्दैन, कारण, डाक्टरीमा कुन प्रकारको जरोमा के दवाई गर्नुपर्छ भन्ने कमी नै हुन्छ । जस्तै सुत्केरीको जरोमा र शरीरमा जुरुङ्ग काढा उम्रेर जाडो लाग्ने जरोमा कुखुराको मासुमा गरम मसला हालेर पकाउनू र राम्रो तीनपाने रक्सीसँग खाएर सुत्नू, भोलिपल्ट नै जरो हराउँछ । तर यसबाहेक अरू प्रकारको जरोमा यो चीज खाए मृत्युको मुखमा पर्न सकिन्छ । नानी जन्मेको चालीस दिनसम्म सुत्केरी भन्न सकिन्छ, त्यसपछि गर्भाशयको मुख बन्द हुन्छ र सुत्केरी भनिदैन ।

२. **माकुराको जालो-** १ लाल भरी केही गुडमा डल्लो पारेर खाए तीन दिनमा आउने जरो अथवा एकुन्द्रो जरोमा लाभ गर्छ ।

३. **बासक (असुरो)**- पाँच हजारदेखि सात हजार फूटको ऊँचाइमा यो पाइन्छ । ५।७ फूट अग्लो यसको झ्याङ्ग हुन्छ । यसको पात कालो गहिरो-हरियो हुन्छ । गेडा पनि हरियै फल्छ । यसको ५।७ वटा मुन्टो चुडाएर पानीमा उमालेर अथवा काँचै माडेर पानीमा मिलाएर हरियो झोल बनाएर छानेर औले जरोमा खाने गरे लाभ गर्छ । यो जरो एक दिन अथवा दुइ दिन बिराएर आउँछ, जसलाई एकुन्द्रो जरो भनिन्छ, जरो आउनुभन्दा अघि शरीरमा जुरुङ्ग काँडा उम्रन्छ, त्यसै बेला यो औषधि पिएर सुत्नू, केही छदाउँछ । छाद्दा मुखमा औंलो कोचेर जतिसक्दो छाद्नू, त्यसपछि जरो हराउँछ । सकभर छाद्दा पहेंलो पित्त पनि जाओस्, यसो गर्नाले जति नै पुरानो औले जरो भए पनि जाती हुन्छ । यदि जरो १५।२० दिनपछि फेरि आए यसरी नै यो औषधि पिए जुनीभरिको लागि यो रोगबाट मुक्त हुइन्छ । यो रामबाण औषधि हो ।

४. **जरोमा पातलो टट्टी**- पनि हुन्छ, साथै उल्टी (छाद्नु) पनि हुन्छ भने आँपको कोयाको गुदी आधा तोला, बेलको गेडा आधा तोला मिलाएर पिसेर तातो पानीसँग खानाले यो रोगमा लाभ गर्छ ।

५. **पीपलको बोक्राको**- चूर्ण, मुजुरको प्वाँख डढाएको खरानी र मह मिलाएर घरिघरि चाट्नू, उल्टी, पखाला बन्द हुन्छ ।

६. **रातो सुकेको खोसानी**- पिंधेर कान्छी औंलाको नङमा जरो आउनुभन्दा पहिला लगाए एकुन्द्रो जरो आउँदैन । मलेरियामा सिस्नुको जरा धोएर एउटा टुक्रा धागोमा बाँधेर पाखुरामा बाँध्नू । यसो गर्नाले जरो हराउँछ । यो उत्तम लक्ष्मी प्रधानको परिचित उपचार हो ।

## ८. जरो आउनेलाई तिर्खा बेसरी लाग्दा

१. फलाम तताएको रातो फलामले झानेको पानी घरिघरि अलि अलि दिने गरे तिर्खा लाग्न बन्द हुन्छ ।

२. ईंटा तताएर रातो पारेर झानेको पानी दिनू ।
३. घोक्रो, जिब्रो, तालु सुक्छ र तिर्खा बेसी लाग्छ भने बिजौरा निम्बू (बिमिरो) को रस घिउ र सिधेनून पिसेर मस्तक (तालु) मा लगाउनू ।
४. केतकी चामलको चौलानीमा मह मिलाएर अलिअलि दिने गर्नू ।
५. मह मुखमा केही बेर राख्नाले पनि पित्तको तिर्खा शान्त गर्छ ।
६. बर, मह, धान भुटेको लावा पिसेर गोली बनाएर मुखमा राख्नू ।

## ९. बाडुली

१. **बाडुलीमा-** बाडुली लागेकोमा बाखाको दूधमा आधा तोला सुठो पकाएर रोगीलाई दिनू ।
२. **साधारण बाडुलीमा-** मनमा फिक्री हुने कुरा सुनाउनू, जस्तै चोर लगाउनु अथवा केही आपत्को झूठा कुरा सुनाउनू, जसमा मन आर्कोतिर जाओस् ।
३. **सुठो र गुड़-** मिलाएर सुघाँउनू ।
४. अलिकता पानीमा सिधेनून मिलाएर नस सुँघाउनू ।
५. **बाखाको दूध-** नपाए आधा पाउ पानीमा आधा तोला सुठो मिलाएर पकाएर छोक्रा छानेर मिश्रीमा मिलाई पन्द्र-पन्द्र मिनेटमा अलि अलि खुवाउनू ।
६. **हिङ र कालो दाल-** पिसेर धूवाँ नभएको कोइलामा धूप झैं डढाएर सुँघाउनू ।
७. स्त्रीको दूध नस झैं सुँघ्नू ।
८. गाईको सिङ डढ़ाएको धूवाँ सुँघ्नू अथवा हुक्का झैं धूवाँ पिउनू ।
९. **मजुरको प्वाँख-** डढ़ाएको खरानी एक-दुइ लाल महमा मिलाएर खानू । आधा घण्टाको फरकमा खानू ।
१०. घिउकुमारीको रसमा सुठो मिलाएर खानू ।
११. **हिङ** - पोलेर सुँघ्नू ।

१२. **पीपलको बोक्रा**- डढ़ाएर पानीमा झान्नू र त्यो पानी पिए बाडुली, तिर्खा रोग, उल्टी जाती हुन्छ ।
१३. पुदीना र चीनी मिलाएर खानू । (पुदीनाको चटनी पनि खाइन्छ ।)
१४. चीनी मात्र खानाले पनि कतिलाई यसले लाभ गर्छ ।
१५. केराको जरा ल्याएर पिंधेर यसको रस सुँघ्नू ।

## १०. पखाला (अतिसार)

१. **दारिमको काँचो** - फलको बोक्रा ताछेर कुटेको बोक्रा उमालेर त्यसमा मह मिलाएर खाए पखाला थामिन्छ ।
२. **मक्खन**- घिउमा मह र मिश्री मिलाएर खानू ।
३. **सेतो चन्दन**- घोटेर मह र मिश्री मिलाएर खानू ।
४. **कालो तिल**- पानीमा पिसेर लुदगी (लेदो) बनाई पाँच भाग बेसी चीनी मिलाएर खानू ।
५. **काँचो बेलको**- गुदी गुड़मा मिलाएर खाए हुन्छ । २ तोलासम्मको खुराक बनाउनू ।
६. **जामुनु**- आँप, अमलाको ताजा-ताजा पात ल्याएर पिंधेर आधा तोला रसमा आधा तोला मह, आधा तोला बाखाको दूध मिलाएर खानू, बाखाको दूध १ तोला भए पनि हुन्छ ।
७. **बेलको** - गेडामा (बेलगिरीमा) बाखाको दूध हाले र पकाई पिउनू,रगत आउने पखालो पनि जाती हुन्छ ।
८. **जामुनु**- अथवा आँपको बोक्रा पिंधेर महसँग खानाले रगत जाने पखाला जाती गर्छ ।
९. **मिश्री**- र मह मिलाएर पिउनाले अथवा मही पिउनाले टट्टीको अघिपछि खून आउन बन्द हुन्छ ।
१०. **पियाज**- मसिनो काटेर ताजा दहीमा मिलाएर खाए रक्त अतिसारमा लाभ गर्छ ।
११. **पुरानो धेरै**- दिनको रगतमासी भए एक खुराक अफिम (आनीभर)

खाएर सुते भोलिपल्ट रगतमासीको नाम रहँदैन । तर नयाँ भरखर परेको २।४ दिनको रगतमासीमा खानु हुँदैन । कम्तीको पनि १५ दिनको भन्दा पुरानो रगतमासीमा मात्र अफिम खानू नत्र लाभको बदला हानि गर्छ ।

१२. **बेलको काँचो**- फल यो रोगमा लाभकारी हो ।

१३. **गाईको दूध**- पाँच तोला, मक्खन घिउ एक तोला, मिश्री आधा तोला, मह आधा तोला मिलाएर खानू ।

१४. **ईसबगोलको भूसी**- चार आना भरी चिसो पानीमा खानाले पुरानो पखालामा लाभ गर्छ ।

१५. **गाईको महीमा**- सिधेनून, गोलमरिच पिसेर मिलाई पिउने गरे रक्त अतिसार जाती गर्छ ।

१६. **गाईको महीमा**- सुठो पिसेर मिलाएर खानाले संग्रहणी रोग अथवा जस्तो खायो पखालामा नपची जाने रोग पनि जाती गर्छ ।

१७. **गुँड़**- चार तोला, सुठो दुइ तोला दुवै मिलाएर आधा (आनी) तोलाको हिसाबले खाए रक्त अतिसारमा लाभ गर्छ ।

१८. **राम्रो अफिम**- र राम्रो चुना बराबर मिलाएर मरिचको दाना जत्रो गोली बनाएर बिहान-बेलुकी एक-एक गोली खाए रगतमासी जाती हुन्छ ।

## ११. पुरानो रोगमा

१९. सुपारी डढ़ाएको खरानी दहीसँग खानू ।

२०. **बेलको काँचो फल**- आगोमा पोलेर खाए रगतमासी जाती हुन्छ ।

२१. **एक तोला**- तुलसीको पातको रसमा अलिकता मिश्री मिलाएर खाने गरे पेटको आउँ, रगतमासीमा लाभ गर्छ ।

२२. **जीरा**- पिसेर दहीसँग खानू ।

२३. डरले अथवा अफसोसले पखाला लागेको भए डर अथवा सुर्ता हटाउने उपाय गर्नू ।

२४. **छाद्नु**-छेर्नुमा आँपको कोयाको भित्री गुदी एक तोला, बेलको गेड़ा एक तोला मिश्री र मह मिलाएर खानू ।

२५. **अजीर्ण अतिसार**- (अपच भएर पखाला लागे) मा जाइफल एक तोला पिसेर गुड़मा मिलाएर चार-चार आना भरीका गोली बनाई आधा-आधा घण्टामा एक-एक गोली तातो पानीसँग खानू । जाइफलको चार गुना गुड़ मिलाएर औषधि बनाउनू ।

२६. चुनाको पानी तरेको निकालेर मिश्री मिलाएर खानाले अपच हुने रोग जाती हुन्छ, यसलाई अंग्रेजीमा ग्राइपवाटर भन्दछन् ।

२७. मलद्वारमा जलन भए अथवा पाकेमा मह, मिश्री, बाख्राको दूध मिलाएर खानू, त्यसैले सेक्नू ।

२८. कालो तिल पानीमा पिसेर जति लुग्दी (लेदो) हुन्छ त्यसको पाँच भाग बेसी चीनी मिसाएर दूधसँग खानू ।

२९. केटाकेटीलाई अथवा दूध खाने नानीलाई पखाला लागे मलद्वारमा खाने तेल लगाइदिनाले पखाला थामिन्छ ।

## १२. बेर्नु पल्टिने रोग

१. सूर्यमुखी फूलको रस हातमा लगाएर भित्र घचेट्नू त जाती हुन्छ, तर जतिपल्ट बेर्नु पल्टिन्छ उतिपल्ट गर्नू । ८।१० दिनमा रोग जाती हुन्छ ।

२. मूसाको चर्बी (बोसो) लगाउने गरे रोग जाती हुन्छ ।

३. स्त्री जातिको भड़ाल्नु पल्टेकोमा पनि सूर्यमुखी फूलको रस र मूसाको चर्बीले लाभ गर्छ । स्त्री जातिले चैं भित्र हुलाएर लगौटी बाँध्ने गर्नुपर्छ । भडाल्नु भनेको योनिको बेर्नु हो ।

## १३. अरुचि (खान अमन हुने रोग)

१. अदुवाको रस र मह बराबर मिलाएर एउटा काँचको अथवा चीनियाँ माटोको गिलासमा राखेर एक-एकछिनमा सानो चमचको एक

एक चमच खाने गरे अमन हुने रोग हराउँछ । यसले खोकी, श्वास रोग, रुघा सबैमा लाभ गर्छ ।

२. अदुवाको रस सिधेनून मिलाएर खानाले पनि लाभ गर्छ ।
३. कागती निंबू दुइ फ्याँक पारेर अलिकता बिरेनून र गोलमरिचको धूलो मिलाएर आगोमा तताएर चुस्नू, तर खोकी साह्रो लाग्दै छ भने रोगीलाई दिनु हुँदैन ।
४. खाना खानको अघि एक टुक्रा अदुवा सिधेनून मिलाएर खाने गरे अरोचक रोग आउँदैन ।

## १४. तृष्ण (भस्म) अग्नि

यो रोगमा जति खाए पनि अघाइँदैन । भोक लागिरहन्छ । यो रोग भएको मान्छेलाई भात भुँड़ीभरि खाएर भाँडा नमलिसकी नै फेरि भोक लाग्छ । यसरी भात पकाउँदै दिए दिनभरि नै खाइबस्छ । दिन-रातमा १५ किलो चामलको भात पनि खान सक्छ । अनि जति खाए पनि पच्छ । यो रोगीलाई जति भोक लाग्छ घिउ नभए दूध मात्र नै भए पनि दिदै गरे रोग जाती हुन्छ । यो पक्का औषधि हो ।

## १५. संग्रहणी

यो रोगमा जस्तो खायो नपची त्यस्तै जान्छ ।

१. अलिकता सुठोको धूलो पारेर गाईको महीमा मिलाएर खानू ।
२. हर्रोको रूखको बोक्रा महीमा पिसेर मिलाएर खानू ।
३. नानीलाई जस्तो हल्का खाना दिनुपर्छ ।
४. सेतो जीरा आधा तोला गाईको दहीमा मिलाएर खानू ।
५. बूढा-बूढीलाई संग्रहणी रोग भए जाती पार्न कठिन छ । संग्रहणी रोगमा मलद्वार खुल्लाको खुल्लै रहन्छ भने रोगी बाँच्दैन । यो रोगमा गाईको मही अमृत हो ।

# १६. बबासीर (हर्षा)

यो रोगमा मलद्वारको मुखमा फोका हुन्छ, टट्टीमा फोका फुटेर खून आउँछ । कसैको भित्र, कसैको बाहिर हुन्छ ।

१. बबासीर-रोगीको टट्टी पातलो हुनु जरूरी छ ।
२. गाईको मही सोल्लर (तिहुन) बनाएर खाने गरे लाभ गर्छ ।
३. दुई तोला घिउमा छिल्का नभएको तिल मिलाएर खानू ।
४. नौनी घिउमा दुई तोला (२० ग्राम) तिल मिलाएर खाने गर्नू ।
५. अपामार्ग झारको बीउ चामलको चौलानीसँग खानू ।
६. गाईको महीमा पिपलाको चूर्ण मिलाएर खानू ।
७. कमलको कलिलो पात पिसेर चीनी मिलाएर खानू ।
८. बिहानै बाख्राको दूध खाने गर्नू ।
९. एउटा नरिवलको गेडो ल्याएर बाहिरी भाग डढाई तीन खुराक बनाएर बराबर सक्खरमा मिलाएर दिनहुँ खाने गरे अनि एक वर्षसम्म सम्भोग नगरे अथवा स्त्रीदेखि पर रहे निको हुन्छ ।
१०. तीतो नीमको पाकेको फलको गुदी चार आना भरी आधा तोला गुडमा मिलाएर खाने गर्नू ।
११. पियाजको रस निकालेर त्यसमा घीउ र चीनी मिलाएर खाने गर्नू, सजिलो र राम्रो औषधि हो ।
१२. गिलोयको रसमा मक्खन (नौनी) मिलाएर खानू ।
१३. फोकामा आँकको पातको सधैं लेप गर्नू, पात पिसेर लगाउनू ।
१४. आँकको दूध अथवा सिउँडीको दूध फोकामा लगाउने गर्नू ।
१५. बबासीरको रोगीलाई मही अमृत हो, तर नून मिलाएर मात्र खानू ।
१६. बबासीरमा (फोकामा जुका लगाएर चुसाउनू) यो वर्षामा पाइन्छ ।
१७. पीपलका कलिला पात तीनवटा, तीतो करेला ठिकैको तीनवटा कुटेर ७ खुराक बनाएर ५।५ मिनेटमा खानू, खाइसक्दा रोग मुक्त हुइन्छ ।

## १७. बबासीरको मन्त्रद्वारा चिकित्सा

१. **ॐ भि भित्ति द्विः ऊः ढः निवासिनी गरलं विषं स्वजीर्ण संभवं अनाशं नाशय ढं ढं ढं फट् स्वाहा ।**
यो मन्त्र भन्दै पानी कुशले चलाउँदै सात दिन पिउनाले रोगबाट मुक्त हुइन्छ ।

२. **ॐ काली महाकाली मतरी बहुभिर्गच्छ यत्ति चहितं कुरुकुरु स्वाहा ।**
यो मन्त्रले बिहानै पानी सातपल्ट फुकेर पिउनू ।

३. **ॐ का का करता करोरी करता आकर करता जो जो सो सो होय । है रसना रसहिसे परवश विष दुर होय दुहाई लोचन मारी की ।**
यो मन्त्रले एक लोटा पानी लिएर ३१ पल्ट मन्त्र जपदै फुक्दै लोटालाई हातमा राख्नू, जमीनमा नराख्नू र मन्त्र गरिसकेपछि यही पानी लिएर टट्टी जानू र त्यही पानीले टट्टी धुनू । जबसम्म टट्टी भइसक्दैन, लोटा हातमा नै राख्नू, लोटा भुइँमा नराख्नू । यसरी लगातार मन्त्र जपेर फुक्दै एक दिन अथवा दुइ दिनसम्म लगातार गरेमा बबासीर रोग जाती हुन्छ । यो धन्वन्तरि महाराजको भनाइ छ । यसलाई धेरैले प्रशंसा गरेका छन् ।

(पाठकले परीक्षा गरेर परिणाम सूचित गर्नुहोला)

## १८. हैजा (विसूचिका)

यो रोग भएमा छेर्नु छाद्नु हुन्छ ।

१. यो रोग लागेकोमा अर्ककपूर उत्तम औषधि हो । यसको बराबरमा कुनै डाक्टर वैद्यको औषधि हुँदैन । अर्ककपूर प्रत्येक घर-घरमा राख्नु जरूरी छ । बनाउने उपाय - (१) रेक्टीफइड स्प्रीट नं०१० को २४ औंस, कपूरको टुक्रा पारेर पाँच औंस, ओयेल मेथिल पिपरमेन्ट दुइ औंस । कपूरको टुक्रा गरेर स्प्रीटमा हालेर

बोतल खूब हल्लाउनू । कपूर बिलिएपछि पिपरमेन्टको तेल मिलाउनू र कर्क (बिर्को) बन्द गरेर राख्नू । चाहिएको बेला झिकेर तीन थोपादेखि दश थोपासम्म उमेर हेरेर चिसो पानीमा अलिकता मिलाएर दिनू । यो कतिवटा आयुर्वेदिक पसलहरूमा पनि पाइन्छ । बोतलको कर्क (बिर्को) राम्रो मुख बन्द नभए उड़ेर जान्छ । यो औषधि हैजाको रामबाण औषधि हो, हरेक घरमा राख्नु जरूरी छ ।

२. **खरेटी**- खरेटीको जरा पानीमा पिसेर पिउनाले हैजा जाती हुन्छ ।

३. **छोटा अलैंची**- सुकुमेल पोलेर दुइवटा पाकेको अथवा काँचो इमली दुइ आनी भर बनाएर चटनी झैं चाट्नू ।

४. **मेवा**- गुलाबजलमा पिसेर खुवाउनू ।

५. **अपामार्गको जरा**- चार आनी भरी, गोलमरिचको दाना पाँच तोला पानीमा पिसेर खुवाउनू ।

६. बाल्ने कपूर चार लाल, सुठो चार आना भरी एकै ठाउँमा १०। १५ मिनट पिसेर एक जीउ भएपछि यो दवाईलाई आठ भाग पारेर पन्द्र-पन्द्र मिनटमा एक-एक खुराक दिनू ।

७. चार अनी भरी जाइपत्री दूधमा पिसेर आधा घण्टाको फरक पारेर दिने गर्नू ।

८. सुकेको खोर्सानी सिधेनून पानीमा उमालेर आधा-आधा घण्टामा अलिअलि दिने गर्नू, खोर्सानी साह्रो पीरो हुने गरी नहाल्नू ।

९. **करेला**- (तीते करेला) को रस तेलमा मिलाएर खान दिनू ।

१०. **बेलको गेड़ा**- र सुठोको काँड़ा पिउनाले हैजा जाती हुन्छ ।

११. **बेलको गेड़ा**- सुठो, जाइफलको काँड़ा पिउनाले हैजा जाती हुन्छ । नं० १० को औषधिभन्दा यो उत्तम हो ।

## १९. हैजामा तिर्खा हटाउने उपाय

१. पानीमा २।४ वटा ल्वाङ हालेर उमाल्नू र आधा पानी सुकेपछि

निकालेर चिसो पारी त्यो पानी अलि-अलि दिने गर्नू । जीउ मिचलाउने, वाक्वाकी लाग्ने, मुटु दुख्ने सबै जाती हुन्छ ।

२. त्वाङ दुइ-चारवटा जति पानीमा पिसेर अलिकता नून मिलाएर गरम गरेर रोगीलाई पिउन दिनू । तिर्खा, अजीर्ण, जीउ दुख्ने जाती हुन्छ ।

३. जाइफलको काँढ़ा बनाएर रोगीलाई अलि-अलि दिने गरे तिर्खा जाती हुन्छ । अथवा जाइफल मुखमा नचपाई राख्नू ।

४. पानीमा झरिलो आगो निभाएर त्यो पानी अलि-अलि खान दिनु ।

५. ईटा रातो पारेर पानीमा डुबाउनू र त्यो पानी छानेर दिनू ।

६. एकदमै तातो पानी फुक्दै पिउनाले पनि लाभ गर्छ । रोगीले जति पानी माँग्छ यसरी नै तातो फुक्दै पिउन लाउनाले पनि लाभ गर्छ । अरू कारणको छेर्नु-छादनुमा पछिको पन्नामा हेर्नुहोला ।

७. पानीमा बरफको टुक्रा हालेर दिनू ।

## २०. हात-खुट्टा बाउँड़िनेमा

१. सुठो पिसेर पाउडर बनाई हात-खुट्टामा मल्नू ।

२. जाइफल तेलमा घोटेर शरीरमा लगाउनू ।

३. शरीर, हात-खुट्टा चिसो भए लुगा तताउँदै सेक्नू ।

४. राम्रो ब्राण्डी र तारपीनको तेल मिलाएर मल्नू ।

५. हैजाको तिर्खामा केराको बोटको पानी दिनु असल हो ।

## २१. मन्दाग्नि (भोक नलाग्ने)

१. हरेडा (हर्रो) को चूर्ण, सुठो, गुड, सिधेनून मिलाएर खाए भोक जाग्छ ।

२. सिधेनून, हिङ, त्रिफला, ज्वानो, मरिच, पिपला, सुठो मिलाएर पाउडर बनाई राख्नू र चाहिंदा सानो चमचको एक चमच खाए भोक बढ्छ, अपच भएको जाती हुन्छ ।

३. पुरानो गुडसँग सुठो, पिपला, हड्डा (हर्रा)को चूर्ण मिलाएर खाए भोक लाग्छ ।
४. सुठोको चूर्ण घिउमा मिलाएर खाई माथिबाट तातो पानी खानू ।
५. सधैं खानको अघि अदुवा खाए भोक बढ्छ ।
६. ज्वानो चार तोला, सिधेनून अथवा बिरेनून एक तोला कुटेर धूलो बनाई भातसित एक चमच फाँको लगाएर गरम पानीले निल्नू ।

## २२. अजीर्ण रोग

खाएको वस्तु नपच्ने, वाक्वाकी लाग्ने अथवा अमिलो डकार आउनेमा -

१. धनियाँ अथवा सुठोको काँडा पिउनू ।
२. दिनमा ४ पल्ट गरम पानी पिउनू ।
३. हिङ, बिरेनून, सुठो, गोलमरिच, पिपला पिसेर लेप बनाई भुँडी-मा दल्नू ।
४. ज्वानोको अर्क खानू ।
५. भात खाएर अजीर्ण भएको भए नरिवल अथवा दूधमा पानी मिलाएर खानू ।
६. खिचडी खाएर अजीर्ण भए बड़ी अलैची खानू (ठूलो अलैची।)
७. रोटी खाएर अजीर्ण भए सुठो र बिरेनून खानू ।
८. मिठाई खाएर अजीर्ण भए पिपला र बिरेनून खानू ।
९. दूधले अजीर्ण भए मही खानू ।
१०. घिउले अजीर्ण भए निंबूको रस, बिरेनून, गोलमरिच खानू ।
११. तेलले अजीर्ण भए अमिलो मही खानू ।
१२. केरा खाएर अजीर्ण भए अलैची खानू ।
१३. आँप खाएर अजीर्ण भए जीराको पानी र बिरेनून खानू ।
१४. अथवा ज्वानो र बिरेनूनको फाँको लगाउनू ।
१५. नानीहरूको भुँडी दुखेमा आमाको दूधमा ज्वानो अलिकता

लगाएर मिलाई खुवाउनु ।

१६. ल्वाङ पानीमा पिसेर बिरेनून मिलाएर गरम पानी पिउनाले अजीर्णमा लाभ गर्छ ।

१७. गाईको मही अजीर्ण नाश गर्ने उत्तम औषधि हो । नून मिलाएर पिउनू ।

१८. कचरमचर खाएर अजीर्ण भए मूलाको गुन्द्रुक पकाएर रस खानू ।

## २३. विसूचिका (हैजा)

१. गर्मीको कारण छेर्नु छाद्नु भए अलैंची, धनियाँ, कागती, गुलाबजल चार आनी भर मिलाएर खानू ।

२. सर्दीले ग्रस्त भएमा हिङ एक तोला, कपूर आधा तोला, खोर्सानी सुकेको १ तोला, अफिम आधा तोला, कुटेर एक साथ मिलाई अलिकता पुरानो गुड़ पाँच तोला मिलाएर चनाको दाना जत्रो गोली बनाएर उमेर-अनुसार ६ गोलीसम्म खान दिनू ।

३. खरेटीको जरा आधा तोलालाई पानीमा घोटेर खुवाउनू । खरेटीलाई नेपालीमा खरेटो, हिन्दीमा बरियार भन्दछन् ।

४. पुदीनाको पात तीसवटा, गोलमरिच ३ दाना, बिरेनून एक आना भरी, छोटा अलैची दुइ दाना, पोलेको इमली, काँचो पाकेको जस्तो भए पनि, एक आना भरी सबै मिलाएर पिंधेर चटनी जस्तो बनाएर चटाउनू, रोग जाती हुन्छ ।

## २४. पसिना बेसी आउने

१. गहत भुटेर पाउडर झैं बनाएर पिस्नू र पसिना बेसी आउने ठाउँमा घस्नू ।

२. एक रत्ती मुगाको भस्म महमा मिलाएर चाट्नू ।

३. पोलेको सुठो र सिधेनून मिलाएर पाउडर झैं बनाएर घस्नू ।

४. चूल्हाको भित्रपट्टि डढेको माटो पाउडर झैं घस्नू ।

## २५. कृमि-रोग (चूर्ना जादि परेमा)

१. नीमको पातको रस मह मिलाएर खाए भुँड़ीको कीरा मर्छ ।
२. ढाकको पातको रसमा मह मिलाएर खाए भुँड़ीको कीरा मर्छ ।
३. धतुराको पातको रस निकालेर खानाले कीरा मर्छ । (बियाँ होइन)
४. ढाक (पलाश)को बीज निकालेर महमा मिलाएर खानाले कीरा मर्छ ।
५. निंबूको पातको रस महमा मिलाएर खानू ।
६. नीमको पातलाई खाने तेलमा डढ़ाएर शरीरमा लगाउनाले जुम्रा लिखा मर्छ ।
७. अमिलो दारिमको बोक्रा अथवा जरा कुटेर काँड़ा बनाएर खानाले पेटको कीरा मर्छ ।
८. नीमको पातको रसमा हिङ मिलाएर खानाले पेटको कीरा मर्छ ।
९. एरण्ड (अन्डी)को पातको रस बालकका मलद्वारमा तीन दिनसम्म दिनहुँ लगाउनाले बालकको चूर्ना सब निस्केर निको हुन्छ ।
१०. धतुराको पातको रस तीन दिनसम्म बालकको मलद्वारमा लगाउनाले चूर्ना निस्किन्छ ।
११. फिटकिरीको पानीले केश धुनाले जुम्रा मर्छ । (केश धुँदा आँखा चिम्म गर्नु अति आवश्यक छ । कारण, पानी आँखाभित्र पस्नु हुन्न ।)

## २६. पिसाब खुल्ने उपाय

१. रायोको प्लस्टर बनाएर नाभिमुनि मूत्रस्थानमा लेप गर्नू ।
२. गरम पानीमा लुगा भिजाउँदै निचोरेर कम्मरमा सेक्नू ।
३. मूसाको लिँड पिसेर (पिंधेर) मूत्रस्थानमा लेप गर्नू ।
४. कपूर धूलो पारेर लिङ्गको मुखमा लगाइदिनू ।
५. यस उपायले पिसाब नभए कयेनोटर लगाउनू ।

६. मूलाको पातको रस गिलासमा निकालेर आधा आनी भरी कलमी सोडा मिलाएर पिउनू ।

## २७. दाँतको कीरा र अरू कीरा

१. बोके (सिल) टिम्बुरको जरा पानीमा उमालेर कुल्ला गर्दा दाँतको कीरा मर्छ ।

२. कलचुडा (कचेडा), मारवाडी भाषामा रिङ्नी, मदेशमा कटेरी । यो बोट झैं हुन्छ, कसैले बोक्सी काँढा, कसैले गाँडे माला भन्दछन् । पाकेको फुटाउँदा कोदोको जाँडको रङको मसिनो गेडा हुन्छ । यसको गेडा आगोमा पोलेर त्यो धूवाँ कीराले खाएको दाँतमा लगाउनाले दाँतको कीरा मर्छ । दाँत दुख्ने जाती हुन्छ । यो उत्तम औषधि हो ।

३. कीराले खाएको दाँतको खाल्डोमा कपूर भर्नाले दाँतको कीरा मर्छ ।

४. हिङ तताएर दाँतको खाल्डोमा भर्नाले आराम गर्छ ।

५. कपूर पिपरमेन्ट मिलाएर दाँतमा च्याप्नाले दाँत दुख्नेमा लाभ गर्छ ।

६. बरको दूध दाँतमा कीरा लागेको खोपिल्टामा लगाउनू लाभ गर्छ ।

७. ल्वाङको तेल लाए अथवा ल्वाङ चेप्नाले दाँत दुखेको लाभ गर्छ ।

८. नून र खाने तेलले दाँत माझे दाँत दुखेकोमा लाभ गर्छ ।

९. पिपला, मह, घिउ मिलाएर कुल्ला गर्नाले पनि दाँतमा लाभ गर्छ ।

१०. तेलको कुल्ला दाँतको लागि उत्तम हो ।

११. तेलमा नीमको पात डढाएर शरीरमा मल्नाले चिलाउने रोग जाती हुन्छ ।

१२. नीमको डुकु खानाले पेटको कीरा मर्छ ।

१३. नीम पिसेर शरीरमा घस्नाले चिलाउने रोग हराउँछ ।

## २८. पाण्डु रोग (दुबी)

(यो रोगमा शरीरमा खून कमी हुन्छ)

डाक्टरहरूले एनीमिया भन्दछन् । खून कमीलाई जण्डीस र पहेंलो हुने रोग भन्दछन् । नेपालीहरूले हड़ताल लागेको भन्दछन् । यो पहेंलो रोग हुनेले सेतो लुगा, कागजलाई पहेंलो देख्छ भने बाँच्न कठिन हुन्छ ।

१. तीतो नीमको पात कुटेर एक पाउ रस निकाल्नू र मिश्री मिलाएर गरम गर्नू, चिसो भएपछि रोगीलाई खुवाउनू,यसले खून बढ्छ ।

२. बिहान खाली पेटमा कुखुराको अण्डा पहेंलो नपाक्ने गरी उसिन्नू र एक लाल लोहाभस्म मिलाएर खाने गरे खून बढ्छ । खूनको कमीले बन्द भएको मासिक धर्म हुन थाल्छ ।

३. जरिङ्गोको जरा कुटेर पानीमा मिलाएर कपडछान गरी एक पाउ खाली पेटमा खाए, जरिङ्गोको जरा उत्तम जुलाब हो । जरिङ्गो नपाएमा तेज जुलाप दूधमा फिटेर खानू, जब जुलाप भइसकेपछि हल्का खाना खानू, त्यसपछि दुइ आना भरी फिटकिरीको धुलोमा चार आना भरी चीनी मिलाउनू, यो एक खुराक हुन्छ खुवाउनू । यस्तै एक हप्ताको लागि दिनमा बिहान, दिउँसो, बेलुकी तीन खुराकको हिसाबले एक्काइस खुराक बनाएर दिनमा तीनपल्ट खुवाए यो रोगको नाम रहदैन । सानोलाई उमेर हेरेर माथि लेखेको खुराक आधा अथवा एक चौथाई गरी खुवाउनू । जुलाप खाएको दिन दिउँसो र बेलुकी दिनू । अरू दिन तीनपल्ट दिनू । अमिलो, पीरो र मासु नखानू । जण्डीसको निम्ति यो रामबाण औषधि हो ।

४. बाख्राको सुकेको बड़कुला एक दुइपल्ट गाईको मूत्रमा पकाउनू र त्यो चूर्ण चार-चार आना भरी, मह दुइ आना भरी घिउमा मिलाएर खाए खून बढ्छ । यो रोगमा अगस्ती बेसी खानु हुँदैन ।

५. त्रिफला र नीमको नरम पातका चूर्ण बनाएर महमा मिलाएर खानू ।

६. ठूलो हड्डा (हर्रो) गाईको मूत्रमा भिजाएर गाईकै मूत्रसँग खानू ।

७. लोहाभस्म एक तोलाको खुराक गर्नू ।
८. पिपला सुठो चार चार आना भरी मिलाएर गाईको मूत्रसँग खानू ।
९. चार आना भरी शिलाजित गाईको मूत्रसँग खाने गर्नू ।
१०. गाईको दूधमा सुठोको धुलो मिलाएर खाने गर्नू ।
११. एक तोला हर्दी (बेसार) आठ तोला गाईको दूधमा मिलाएर खानू । दूध अन्दाजले खाए हुन्छ ।
१२. नीमको रस र घिउ मह मिलाएर खानू । घिउ र मह बराबर नगर्नू ।
१३. हड्डा (हर्रो) को चूर्ण महमा मिलाएर खाने गर्नू ।
१४. कुट्की र मिश्री चपाएर मनतातो पानीले निल्नू ।
१५. बेलको पात कुटेर रस निचोरेर त्यो रसमा चार-पाँचवटा गोलमरिच मिलाएर खानू । यो सबै खून बढ्ने उपाय हो ।
१६. निंबूको रस २।३ थोपा आँखामा लगाउनाले पहेंलो जान्छ । यो रोगीले अमिलो, पीरो र मासु खानु हुँदैन । जन्डीसको लागि नं० ३ को औषधि परीक्षित हो ।

## २९. प्रमेह

यो रोगमा औषधि नगरी बसे मधुमेह डाइबिटीज हुन्छ ।

१. **क्षार प्रमेह**- रोगीको पिशाबमा गन्ध बेसी हुँदा मधेशको खारा पानी झैं छ भने त्रिफलाको हिम (जल) बिहान-बिहान खानू (हिम बेलुकी चिसो पानीमा भिजाइराखेर बिहान निथारेर खानेलाई भन्दछन् ।)
२. **नील प्रमेह**- यो रोगीको पिसाब नीलो रङ्ग (पपिहा या न्याहुली पक्षीको रङ्ग) को हुन्छ । यो रोगीलाई नीमको बोक्राको भित्री भाग, अमला, गिलोय र परवरको पातको काँडा असल हुन्छ ।
३. **हरिद्र प्रमेह**-यो रोगीको पिसाब हर्दीको झैं गहिरो रङ्गको पहेंलो हुन्छ । यो रोगीको पिसाबमा जन्डिस पनि हुन सक्छ । यो रोगीले सेतो चन्दन र मिश्री मिलाएर खाई बेलुकी ईसबगोलको भूसी र

मिश्री चिसो पानीमा भिजाएर राख्नू । बिहान उठ्ने-साथै एउटा कागतीको रस निचोरेर मिश्री मिलाई फिटेर खानू, कागतीको गेडा खानु हुँदैन ।

४. **मजिठो प्रमेह**- यो रोगीको पिसाब मजिठोको रङ्ग जस्तै हुन्छ । यो रोगमा नीमको बोक्रा, अर्जुन रूखको बोक्रा, हरियो कमलगट्टाको काँडा अथवा हिम असल हुन्छ ।

५. **रक्त प्रमेह**- यो रोगीको पिशाब खूनको रङ्ग जस्तैं हुन्छ । यो रोगीले कमलको फूलको काँडा अथवा ढाक (पलाश)को फूलको काँडा, सितलचिंनी (कवाबचिनी), मिश्री फाँको लगाई माथिबाट चिसो पानी पिउनू ।

६. **बसाप्रमेह**- यो रोगीले चर्बी (बोसो) जस्तो पिसाब गर्छ । यो रोगीले अरनीको काँडा पिउनू ।

७. **मज्जाप्रमेह**- हड्डीको भित्री गुदी (मासी) झैं पिसाब गर्छ । उपरोक्त संख्या ५ अनुसार उपचार गर्नु आवश्यक छ ।

८. **क्षौद्रप्रमेह**- यो रोगीको पिसाब महको रङ्गको हुन्छ । वातज प्रमेहको उपचार गर्नू ।

९. **हस्तिप्रमेह**- हात्तीले जस्तो वेग-रहित बिस्तारै घरि-घरि पिसाब गर्छ । करेलाको रस एक तोला, तुलसीको रस एक तोला मिलाएर प्रत्येक बिहान खाली पेटमा खाने गरे रोगी निको हुन्छ ।

## ३०. सबै प्रमेह-रोगीको सरल उपचार

प्रमेह रोग कफज (कफ), वातज (वात), पित्तज (पित्त) हुन्छ । यी सबै वर्णन यहाँ लेखिदैन । सबै प्रकारको प्रमेह-रोगीले काममा ल्याउन सक्नेछन् ।

१. चार आना भर हर्दी मह मिलाएर खानाले सबै प्रमेहमा लाभ गर्छ । यसलाई विद्यावागीश रस भनिन्छ । जवानको लागि अमलाको चूर्ण एक तोला, हर्दी दुइ आना भरी, मह एक तोला यथेष्ट हो ।

२. गिलोयको (गुर्जोको) रसमा मह मिलाएर खानू । जति प्रकारको रोगमा मह लेखिएको छ त्यो मौरीको मह हो । नयाँ ताजा मह-भन्दा जति पुरानो मह उति उत्तम हो । नयाँले लाभ गर्दैन । अमलाको रस २॥ तोला, मह एक तोला, दुइ आना भरी हर्दी यो प्रशंसा गर्ने औषधि हो ।

३. दुइ आना भर शिलाजित, एक तोला महमा मिलाएर खाने गरे वा एक्काइस दिनसम्म चाट्ने गरे सबै प्रमेहमा लाभ गर्छ ।

४. त्रिफलाको चूर्ण, शुद्ध शिलाजित र मह सबै प्रकारको प्रमेहमा लाभ गर्छ ।

५. प्रमेह रोगीले मूसाको तीन-चारवटा लिंड़ दूधसँग खाने गरे सबै प्रमेहमा लाभ गर्छ ।

६. त्रिफलालाई पिसेर पानीमा घोल्नू र त्यो पानीमा काँचो चना भिजाइराख्नू । सधैँ बिहान-बिहान यसरी भिजाएको चना खाने गरे रोग छुट्छ । चना काँचै खानू ।

७. एक दुइ तोला अमलाको चूर्णमा मह फिटेर दुइ तीन महीना लगातार खाए रोगबाट छुट्कारा पाउँछ ।

८. पाकेको केराको कोसासँग अमलाको रस, मिश्री, मह मिलाएर खाने गरे पानी जस्तो धातु जाने प्रमेह पनि जाती हुन्छ ।

९. त्रिफलाको चूर्ण एक तोला, हर्दी चार आना भरी, मह एक तोला, दुइ लाल अभ्रकभस्म मिलाएर खाने गरे एक महीनामा सबै प्रकारको प्रमेह नष्ट गर्छ । (त्रिफला भनेको हड्ड़ा (हर्रो), बहड़ा (बर्रो), अमला तीन चीज मिलेकोलाई भन्दछन् । तयारी पनि आयुर्वेदिक दोकानमा किन्न पाइन्छ । डाइबेटिज रोगीले प्रमेहको उपचार गर्नू । यदि कुनै प्रकारको प्रमेहबाट डाइबेटिज भएको छ भन्ने थाहा भए सजिलै रोग मुक्त हुन्छ । यो रोगको

अरू उपचार हेर्ने इच्छुकले चिकित्सा चन्द्रोदय चौथो भाग पढ्नुहोला । यहाँ संक्षिप्तमा लेखिएको छ ।

## ३१. सन्तान उत्पादक उपाय

१. पिपला, सुठो, गोलमरीच र नागकेशर समभाग मिलाएर पिस्नू र आधा आनी भरीको खुराक बनाएर आधा तोला घिउमा मिलाएर बिहान-बिहान सात दिनसम्म खानू ।

२. नागकेसर अनि सुपारीको धुलो मिलाएर सेवन गर्नाले गर्भ रहन्छ ।

३. गर्भ रहेपछि गर्भवतीले ढाक (पलाश) को पत्ता दूधमा पिसेर पिउनाले छोरा हुन्छ । नोट- ढाकको बीउको खरानी र हिङ मिलाएर खाए गर्भ रहदैन । वन्ध्या (थारी) हुन्छे ।

४. पुत्रजीवी रूखको जरा, देवदारु (गोब्रेसल्लो) दुवै दूधमा पिसेर सेवन गर्नाले छोरा हुन्छ ।

५. (बिमिरोको गेड़ा दूधमा पिंधेर पिउनाले गर्भ हुन सक्छ ।

६. नागकेशर चार आना भरी, जीरा चार आना भरीको खुराक बाछा-वाला गाईको दूधमा दिनहुँ सात दिन खानाले वन्ध्याको (थारीको) पनि नानी हुन्छ ।

७. छोराको नालमा मिश्री मिलाएर खानाले गर्भ रहन्छ ।

८. नागकेशर चार आना भरी, जीरा चार आना भरी मिलाएर गाईको एक तोला घिउसँग ऋतुस्नानको चौथों दिनदेखि तीन दिनसम्म दिनहुँ खानाले गर्भ रहन्छ ।

९. छाकड़ा पन्द्रवटा, धनियाँको जरा एक तोला दूधमा उमालेर दिनहुँ सात दिन खानाले गर्भ रहन्छ ।

१०. रक्सीमा बाजको सुली एक तोला मिलाएर खानाले गर्भ रहदैन ।

११. सुकेको सखरकन्द पिसेर घिउ र चीनी मिलाएर हलुवा बनाएर खाए लोग्नेमान्छे नामर्द पनि मर्द हुन्छ ।

१२. एउटा पाकेको केरा आधा तोला घिउसँग बिहान-बिहान खानाले धातुरोग लाग्ने मान्छेलाई जाती गर्छ । सर्दी लाग्ला झैँ भए २४ थोपा मह मिलाएर खानू ।

**नोट**- माथि लेखिएका गर्भ रहने उपायहरू योनिमा अरू कुनै रोग भए पहिला त्यसको उपचार गर्नु आवश्यक छ, त्यसो भए मात्र उपरोक्त औषधिको परीक्षण गर्नू नत्र काम लाग्दैन ।

## ३२. नपुंसक

नपुंसक धेरै प्रकारको हुन्छ । यहाँ छोट्करीका उपायहरू मात्र दिइन्छन् ।

१. सेतो पियाजको रस आधा तोला, अदुवाको रस आधा तोला, मह, घिउ चार-चार आना भरी मिलाएर यही मात्रानुसार दुइ महीनासम्म दिनहुँ खाने गरे नपुंसक मर्द बनिन्छ । घिउ र मह बराबर नगर्नू ।

२. पियाजको रस बाह्र आना भरी, अदुवाको रस आधा तोला, मह चार आना भरी, घिउ छ: आना भरी अथवा महभन्दा केही बेसी अथवा कम्ती मिलाएर बिहान-बिहान चाट्ने गर्नू, त्यसपछि चीनी मिलाएर दूध पिए दुइ महीनामा वीर्य खूबै बढ्छ ।

३. सिमलको रूखको बोक्राको रस दुइ तोलाकन मिश्री मिलाएर खाने गरे सात दिनमा नै वीर्य बढेको थाहा लाग्छ ।

४. पिपलाको चूर्ण र मिश्री बराबर मिलाएर आधा तोलाको खुराक बनाई खाएर दूध दिनहुँ पिउने गरे वीर्य खूब बढ्छ ।

५. धतुराको फूल सुकाएर पिसी मह मिलाएर चनाको दाना जत्रो गोली बनाउनू र दिनहुँ एक-एक गोली दूधसँग खाए चालीस दिनमा वीर्य बलवान् हुन्छ ।

६. कुखुराको अण्डाको रानी (पहेंलो), बतासा तीनवटा, घिउ तीन तोला मिलाएर पकाउनू, जबसम्म पाक्दैन चलाइबस्नू, पाकेपछि

निकाली सेलाएर खानू, चालीस दिन यसरी खानाले खूबै पुष्ट हुइन्छ । यो चमत्कारी औषधि हो ।

## ३३. सुजाक

सुजाक र मूत्रकृच्छ्र दुई प्रकारको रोग हो । मूत्रकृच्छ्र वात आदि दोष, घाम, आगो आदिमा बेसी बस्नाले हुन्छ । सुजाक दूषित संसर्गले हुन्छ । अथवा हस्तमैथुनद्वारा पनि हुन सक्छ । सुजाकको उपचार गर्नुभन्दा पहिला तेज जुलाब खाएर त्यसपछि उपचार गर्नू । यस रोगमा पिशाब ज्यादा मात्रामा हुने औषधि दिनुपर्छ ।

१. काँक्राको बीउ, दारुहर्दी, मुलेठी तीनैवटा धूलो पारेर चामलको चौलानीमा फिटेर पिउनू ।
२. काँक्राको बीउ पिंधेर कल्मी सोड़ासँग चिसो पानीमा फिटेर खानू ।
३. काँक्राको बीउ पिसेर मिश्री र चिसो पानीमा फिटेर खानू ।
४. कुकुरे झारलाई चिसो पानीमा झोल बनाई मिश्री मिलाएर खानू यो झारलाई फारुले, सिल्ली, बिसल्ली, खस्ने, आँख्ले, रामटोकरे नेपालीमा अनेकौं नाम भन्दछन् । हिन्दीमा सोमकल्प लता भन्दछन् ।
५. सितलचिनी (कबाबचिनी) खस्रो कुटेर दुइ तोला चूर्ण १६ तोला पानीमा पकाएर चार तोला रहेपछि उतारेर छानी चिसो भएपछि ८।१० थोपा सेतो चन्दनको तेल अथवा सेतो चन्दन घोटेको मिलाएर बिहान, दिउँसो, बेलुकी तीनपल्ट पिउने गर्नू ।
६. दुइ तोला कुकुरौधा (नेपालीमा दूधेझार) को रसमा मिश्री फिटेर एक गिलास पानीमा पिउनू ।
७. बेलको जरा कुटेर बेलुकी पानीमा भिजाइराख्नू, बिहान पानी कपड़छान गरी मिश्री मिलाएर पिउनू ।
८. लौकाको खीर बनाएर खानू ।
९. बेतलौरीको रसमा मिश्री मिलाएर पिउनू ।

१०. बरको डुकु छाँयामा सुकाएर बराबर सख्खर मिलाएर सधैँ बिहान खाएर दूधको शर्बत अथवा गाईको मही पिए सात दिनमा सुजाक जाती हुन्छ ।

नोट- दूधको शर्बत आधा दूध र आधा चिसो पानी मिलाएर खूब सारफेर गर । जति बेसी सारफेर गर्न सक्छौ उति असल हुन्छ ।

११. केराको बोटको रस मिश्री मिलाएर पिउनू ।

१२. बिहान-बिहान बरको दूध दुइ आना भरी-जति बतासासँग खानू ।

१३. सेतो चन्दन घोटेर चिसो पानीमा मिलाई पिउनू ।

१४. बिहान-बेलुकी एक आनी फिटकिरी पानीमा मिश्रीसँग फिटेर खानू ।

१५. हरिद्र प्रमेहमा लेखे अनुसार ईसबगोलको भूसी खानू ।

१६. धनियाँ (मसालामा खाने) एक मुठी चिसो पानीमा भिजाइराख्नू, चियाको रङ्ग झैं आएपछि मिश्री मिलाएर खानू ।

१७. लिंगलाई चिसो पानीले भिजाउँदा तत्कालै पिसाब पोल्ने जाती हुन्छ ।

१८. दुइ तोला रक्सी एक गिलास पानीमा मिलाएर अलिकता नून फिटेर खाए पिसाब पोल्ने तत्कालै जाती हुन्छ ।

१९. बाटोमा पिसाब पोलेर आपत् परे चिसो पानीले लिंग पूरा भिजाई चिसै पानी पिउनू, खोला अथवा चिसो पानीको कुवा भए लिंग डुब्ने गरेर त्यसमा बसे तत्काल लाभ गर्छ ।

## ३४. पिसाबबाट खून आउने र मूत्रनलीबाट रगत बग्ने रोग भए

१. धनियाँ चिसो पानीमा भिजाएर रङ्ग आएपछि छानेर मिश्री मिलाई पिउनू । २. चन्दनको चूर्ण मिश्री पानीमा निलाएर पिउनू । ३. बेतलौरीको रस पिउनू । ४. केराको बोट निचोरेर त्यो पानीमा मिश्री मिलाएर पिउनू अथवा कुनै पनि पिसाब सफा हुने औषधि खानू, त्यसपछि गाईको एक पाऊ दूधमा दुई आना भर अथवा डेढ ग्राम अन्दाजी फिटकिरी पिसेर दूधमा फिटेर पिए

खून जान तुरुन्त बन्द हुन्छ । एक खुराकले केही कम मात्र भए ८।१० घण्टापछि अर्को खुराक सेवन गरे हुन्छ ।

**याद गर्नुपर्ने कुरा-** पिसाब सफा हुने औषधि नखाई एकैचोटि फिटकिरी दूधमा फिटेर दिनाले रक्त जाम हुन सक्छ । केही नभए मिश्री पानी मात्र भए पनि पिउनाले पिसाब ज्यादा मात्रामा हुन्छ, यसो भएमा खून पतला हुन्छ ।

**मूत्रपथरी-** पिसाबको नलीमा ढुङ्गा भए पिसाब गर्दा असाध्य दुख्छ, जब ढुङ्गा नलीबाट केही हट्छ, त्यस बेला केही शान्ति पाइन्छ । यो रोगको उपचार काँक्राको बियाँ खाने गरे लाभ गर्छ गहतको झोल बनाएर खाने गरे ढुङ्गा टुक्रा-टुक्रा भएर जान्छ । जङ्गली काँक्राको जरा यो रोगको उत्तम औषधि हो । यसलाई संस्कृतमा अरण्य कर्कटी, बंगलामा बानो काँकुडी भन्छन् । बङ्गालमा यो तितो हुनाले यो काँक्राको चटनी पनि बनाएर खान्छन् भनी लेखिएको छ, यसको जरा कुटेर पानीमा मिलाएर कपड़छान गरी खानू । तर घरको काँक्राको जरा खानु हुँदैन । फलको बियाँ जति खायो उति लाभदायक छ । जङ्गली काँक्राको जरा भनेकोमा घरको काँक्राको जरा भुलेर पनि नखानुहोला ।

## ३५. साँपले टोकेको उपचार

१. साँपले ठुङ्नासाथ ठुँगेको ठाउँमा माचिसको बारुद अथवा झरिलो आगोले डढाइदिए विष लाग्दैन ।
२. साँपले ठुङ्नासाथै ठुडेको ठाउँमा पिसाब गरिदिए विषको रोग झरेर जान्छ ।
३. साँपले टोक्नासाथ नजिकमा पानी भए निचोरी निचोरी धुनू, सकभर ठुँगेको घाउलाई चक्कुले घाउ अरू बढाएर धुनू ।
४. साँपले टोकेकोलाई तेल, गहत, रक्सी, अमिलो पदार्थ खान दिनु हुँदैन ।
५. ठुङ्नासाथ मूसा पक्रेर भुँडी चिरेर तातोतातै टोकेको ठाउँमा

डल्लै चिरेको भुँडी टँसाएर बाँधिदिनू, यसो गर्नाले विष मूसापट्टि जान्छ ।

६. छाता ओडेर हिड्ने मान्छेलाई साँपले ठुङ्दैन । छाता देख्दा गरुड़ आयो भनी अत्तालिन्छ ।

७. ठुडेको ठाउँमा चित्रे बन्सी, सिमझार (नसे) पनि लगाउनु भन्दछन् ।

८. पीपलपाते लहराको जरा घोटेर लगाइदिए विष सर्दैन । साँपले ठुङ्नासाथ ढुङ्ग्रो लगाएर चुस्नू र घाउ धुनू ।

९. झारमौरी टाँसिदिए असल हो । नीमको रस अलिकति घोटेर चाख्नु त विष भए तितो हराउँछ । अथवा कुनै जानकारलाई औषधि गर्न लगाउनू ।

## ३६. साँप भगाउने उपाय

१. रायो र नौसागर घरमा छरिदिनाले साँप भाग्छ ।

२. बाह्रसिंगेको सिंग घरमा झुण्ड्याइराखे साँप आउँदैन ।

३. घरमा गन्धकको धुँवा लगाउनाले पनि साँप आउँदैन ।

४. साँपको काँचुलीको धुँवा लगाउनाले पनि साँप आउँदैन ।

## ३७. मच्छड़ (लामखुट्टे)

१. छरिला र फिटकिरीको धुँवाले मच्छड भाग्छ ।

२. घरको बाहिर पहेंलो रंग लगाए मच्छड कम्ती आउँछ ।

३. घरको दैलोमा घोड़ाको पुच्छर फिजाएर चुण्ड्याउनाले मच्छड़ आउँदैन ।

४. मच्छड़ले टोकेकोमा पियाज दल्नाले चिलाउँदैन ।

५. तुलसीको बोट घरवरिपरि लगाए मच्छड़ कम लाग्छ ।

६. तुलसीको पातको रस घसेर सुते मच्छड़ले टोक्दैन ।

## ३८. बिरालोले टोकेको विष

१. चुसेर विष निकाल्नू ।

२. घाउमा पियाज कुटेर लगाउनू ।
३. कालो तिल पिसेर लगाउनू ।

## ३९. कुकुरले टोकेकोमा

१. ओखरको गुदी झिकेर टोकेकोमा लगाएर केही बेरपछि कुखुरालाई दिनू, कुखुराले खाएन भने अथवा खाएर मऱ्यो भने कुकुर बौलाहा भएर टोकेको भनी जान्नू ।
२. एउटा रोटीको टुक्रा केही बेर घाउमा राखेर कुकुरलाई दिनू, खाएर कुकुर मऱ्यो अथवा खाएन भने बौलाहा कुकुरले टोकेको भनेर जान्नू ।
३. बौलाहा कुकुरले टोकेको मान्छेलाई कुदाएर खूबै पसीना निकाले लाभ हुन्छ ।
४. लहसुन, पियाज र नून पिसेर घाउमा लगाउनू ।
५. जुन कुकुरले टोकेको छ, त्यही कुकुरलाई मारेर त्यसको कलेजो भुटेर खानू ।
६. पाखनवेद यो रोगीको उत्तम दवाई हो । खानू अनि लगाउनू ।
७. तीन महीनासम्म घाउ जाती हुन नदिनू, आकाशे लहरा पिसेर हड्डा (हर्रो) मिलाएर काँड़ा बनाएर लगाउनू ।
८. टोकेको ठाउँमा घिउ तताएर लगाउनू ।
९. सेतो पुनर्नवा र धतुराको जरा रोगीलाई खुवाउनू अथवा कुकुरको जिब्रो खरानी बनाई लगाउनू ।

## ४०. साधारण कुकुरले टोकेकोमा

१. सिस्नु कुटेर लगाउनू ।
२. टोकेको ठाउँमा मूलाको पात तताएर सेक्नू ।
३. टोकेकोमा मूसाको लिंड पिसेर लगाउनू ।
४. पियाज, नून, मह र सिरका मिलाएर लगाइदिए घाउ छिटो जाती हुन्छ ।

## ४१. माकुराको विष

१. पहाड़ी चामल चपाएर थुकसँगै दल्नू ।
२. चुना र निम्बूको रस मिलाएर लगाउनू ।
३. चुना, चिरौंजी, खाने तेल मिलाएर लगाउनू ।
४. पिना दहीमा पिसेर लगाउनू ।
५. पिना डढाएर धुँवा लगाए पनि हुन्छ ।
६. पुनर्नवाको जरा पिसेर लगाउनू ।
७. आपमार्गको जरा पिसेर लगाउनू ।
८. चौलाईको साग पिसेर लगाउनू ।

## ४२. प्रदर रोग

स्त्री जातिको प्रत्येक महिनामा मासिक धर्म हुन्छ । यो स्त्री जातिको निरोगको चिह्न हो । खून-तीन चार दिन बगेर बन्द हुन्छ । तर धेरै दिनसम्म खून बग्ने अथवा योनिबाट सेतो पानी बग्नेलाई रक्त प्रदर, श्वेत प्रदर भन्दछन् ।

१. अशोकको रूखको बोक्रा दुइ तोला कुटेर आधा सेर पानीमा पकाएर चार भागमा तीन भाग सुकेपछि छानेर मिश्री मिलाएर एक पाउ दूधमा फिटेर खानू । धेरै दिन खाने खुराक बनाउनुपरे उही मात्रा बढाएर पकाई मिश्री मिलाएर राखी दिनहुँ बिहान खाए हरेक प्रकारको गर्भाशयको रोग जाती हुन्छ । गर्भपात हुने र प्रदरको कारण छोरा-छोरी नहुने सबैलाई रामबाण औषधि हो । यो स्त्री जातिको लागि छाँयास्वरूप हो र नै सीतालाई अशोक वाटिकामा राखेको भन्ने कथा पाइन्छ । यही बोक्राबाट अशोका भन्ने इन्जेक्सन, अशोका काडीयल कम्पाउण्ड, अशोकारिष्ट अनेकौं औषधि बनिन्छ, तर आफैले बनाएर खाएकोमा गुण बेसी हुन्छ ।
२. पाकेको केरा केही दिन दूधमा मुछेर खाने गरे सेतो प्रदर जाती हुन्छ ।

३. बिहान-बेलुकी पाकेको केरा आधा आधा तोला घिउसँग एक एक कोसा खाए श्वेत प्रदर आठ दिनमा नै ठिक पार्छ ।

४. बिहानै चारवटा गुलाबको फूलकन चार आना भरी मिश्री मिलाएर खाने गरे श्वेत प्रदर जाति गर्छ । रक्त प्रदरमा पनि यसले सहायता गर्छ ।

५. तीतो नीमको पातको रस अथवा बोक्राको रसमा केही मह मिलाएर खाने गरे प्रदर रोगबाट मुक्त हुइन्छ । यसले मूत्रकृच्छ्र पनि जाती हुन्छ ।

६. कपासको पातको रस चामलको चौलानीमा फिटेर खानू ।

७. मूसाको लिंड़ ८।१० वटा पिसेर एक पाउ गाईको दहीसँग फिटेर खाए नदीको समान बग्ने खून पनि बन्द हुन्छ । यो रक्त-प्रदरको उत्तम औषधि हो । एक दुई खुराकले नै रामबाण औषधिको काम गर्छ । यसमा दुइ आना भरी फिटकिरी धुलो पारेर मिलाई खाए झन् उत्तम औषधि हो । यो औषधिले कैयौं रोगी रोगमुक्त भएका छन् ।

८. मूसाको लिंड़ ८।१० वटा पिसेर एक पाउ दूधसँग दिनमा दुइपल्ट खाने गरे रक्त प्रदर दुइ दिनमा नै निको हुन्छ । मूसाको लिंड़ रक्त प्रदरको उत्तम औषधि हो ।

९. भुइँअमलाको जरा चामलको चौलानीसँग खानू ।

१०. मृगको खून मह मिलाएर खाए पित्तज (पित्त) प्रदर रोग जाती हुन्छ । पित्तज (पित्त) प्रदरमा पहेंलो सिङान जस्तो केही जलनको साथ आउँछ ।

११. खरेटीको जरा दुइ तोला, चामलको चौलानीमा पिसेर महसँग मिलाएर खानू । (खरेटीलाई हिन्दीमा बरीयार भन्दछन् ।)

१२. कपासको जरा चामलको चौलानीसँग खानू ।

१३. मुलेठी एक तोला, मिश्री एक तोला मिलाएर चामलको चौलानीसँग खानू ।

१४. ऊखुको रसले पित्तज (पित्त) प्रदर रोग जाती गर्छ ।
१५. दारीमको बोक्रा उमालेर त्यसको पानी पिउनू ।
१६. बैगुनको (भन्टाको) मुन्टो पानीमा घोटेर खानू ।
१७. सुक्खा धनियाँ एक मुठी चिसो पानीसँग खाने गर्नू । कति जना मासिक धर्म बन्द भएकी बुढी स्त्री जातिलाई फेरि खून आउने हुन्छ । उँभोकाहरूले नं० ७ र नं० ८ को औषधि प्रयोग गर्नु आवश्यक छ । प्रदर रोगीले सिस्नु खानु हुँदैन । सिस्नुले रोग बढ्छ । यो रोगीको यो दुश्मन हो ।

## ४३. सोम-रोग

यो रोगमा पिशाब घरि-घरि आउँछ । यो रोगको चाँडो उपचार नगरे पुरानो हुन गए स्त्री-जातिको पिशाब रुक्न सक्दैन, उठेर जाँदा-जाँदै पिशाब चुहुन थाल्छ । लोग्नेमान्छेको बहुमूत्र रोग झैं एकहोरो पिशाब आउँछ । लापरवाही गरी औषधि नगरे मृत्युको मुखमा पर्छ ।

१. केरा पाकेको एक कोसा, अमलाको रस, मह, मिश्री सबै मिलाएर दिनहुँ खाने गरे सोम-रोग जाती हुन्छ ।
२. कालो दालको आँटा, मुलेठी, बिदारीकन्द, मह, मिश्री सबै मिलाएर बिहान खाने गरे रोगबाट मुक्ति पाउँछ ।
३. यदि सोमरोगमा दुख्छ पनि भने पिशाबसँग सोमधातु पनि आउँछ भने ताजा रक्सीमा अलैची र तेजपत्ता चूर्ण बनाएर मिलाएर खानू ।
४. सतावर (कुरिलो) को चूर्ण फाँको लगाएर माथिबाट दूध पिउनू ।
५. अमलाको गेड़ा पानीमा पिसेर त्यसमा मह र मिश्री अथवा चीनी मिलाएर खाने गरे तीन-चार दिनमा रोगबाट छुट्कारा पाउँछ ।
६. पाकेको केरा, बिदारीकन्द र सतावर (कुरिलो) यो सबै एकै ठाउँ पिसेर दूधसँग बिहान पिउनाले रोग मुक्त हुन्छ ।
७. आधा तोला नागकेसर महीमा पिसेर महीसँग तीन दिन खानाले

रोग मुक्त हुन्छ ।

८. मुलेठी, अमला, मह, मिश्री मिलाएर खाए सोम-रोग मुक्त हुन्छ ।

## ४४. योनि-रोग

यो रोग धेरै प्रकारको हुन्छ । यहाँ छोट्करीमा दिइन्छ -

१. **उदावर्ती** - यो रोगमा मासिकको खून गाँठो परेर आउँछ ।
२. मासिक धर्म बन्द हुनु अथवा समयमा नहुनु ।
३. सम्भोग गर्दा योनि बाहिर निस्कनु ।
४. मासिक धर्मको खून आउँदा सीयोले घोचे झैं हुनु ।
५. खून तातो भएर आउनु ।
६. लिंगको रगड़ले योनि बाहिर निकल्नु ।
७. खूनमा गर्मी भएको कारण गर्भ नरहनु ।
८. सम्भोग गर्दा तृप्त नहुनु ।
९. गर्भाशयको किनारमा फोका हुनु ।
१०. योनि सम्भोग गर्ने योग्य नहुनु ।

माथि लेखिएको रोग-बाहेक अन्य रोग पनि हुन सक्छ ।

## ४५. योनि-रोगको उपचार

१. तेलमा रुवा भिजाएर योनिमा राख्नाले योनि-रोगमा लाभ गर्छ ।
२. औषधि मिलाएको पानीले डुस गर्नू (अथवा योनि प्रक्षालन गर्नू ।)
३. रोग अनुसार औषधि खानू ।
४. मूसालाई पानीमा पकाएर गलाएर तिलको तेलमा डढाउनू र तेल रुवामा भिजाएर योनिमा राख्नू, यसले धेरै योनि-रोग जाती गर्छ । योनिको फोकाहरू सबै जाती गर्छ ।
५. मूसालाई त्यसै तेलमा डढ़ाएर त्यो तेल काममा लगाउन सकिन्छ ।
६. आलु पोले झैं मूसालाई भुँग्रोमा पोलेर त्यसको मासुमा नून मिलाएर योनिमा राख्ने गरे अनेकौं योनि-रोग जाती गर्छ ।

७. करेलाको जरा पिसेर योनिमा राख्नाले योनि भित्र पसेकोमा लाभ गर्छ ।

८. मूसाको चर्बी (बोसो) योनिमा लगाउनाले बाहिर निस्केको योनि ठीक हुन्छ, तर लङ्गौटी लगाउनू ।

९. तितो नीमलाई नीमकै रसमा पिसेर योनिमा राख्नाले योनि दुख्ने रोग जाती गर्छ । रुवामा भिजाएर राखे पनि हुन्छ ।

१०. अण्डीको बीज (बिउ) पिसेर लगाउनाले योनि दुखेको जाती हुन्छ ।

११. पाखनबेत योनिमा लाभकारी हो । यसको चिया बनाएर खानू, यसैको रस योनिमा लगाउनू ।

## ४६. बन्द भएको रजोधर्म

स्त्री जातिलाई रजोधर्म नभए अनेक प्रकारको रोग हुन्छ ।

१. खून शरीरमा कम भएर मासिक नभएको भए बिहान उठ्ने-बित्तिकै केही नखाई एउटा कुखुराको अण्डा रानी काँचो बस्ने गरी उसिनेर त्यसमा एक लाल जति लोहाभस्म मिलाएर अथवा अलिकति नून पनि मिलाएर खाए स्वादिलो हुन्छ । लोहाभस्म नपाए डाक्टरकोबाट आइरोन ट्याब्लेटसँग खाने गरे हुन्छ । यदि त्यो पनि नपाएमा अण्डा मात्र खाने गरे पनि हुन्छ । आधा पाकेको अण्डा खून बढाउनमा उत्तम हो ।

२. गर्भाशय टेड़ो भएको छ भने औंलाले सीधा जानकारीले गर्न सक्छ ।

३. शरीर मोटो भएर गर्भाशयको मुख बन्द भएकोमा शरीरलाई घटाउनुपर्छ ।

४. गर्भाशय फुलिएकोमा मोटापा घटाउने उपाय गर्नू ।

५. धेरै दिन सुकाएको आँपका पात उसिनेर खुवाउनू ।

६. कमलको फूलको जरा पिसेर खानू ।

७. कपासको पात र फूल आधा पाउ ल्याएर एक सेर पानीमा हालेर पकाई एक पाउ पानी रहेपछि उतारेर छान्नू र चार तोला

गुड़ मिलाएर खानू ।

८. मूलाको बिउ, गाजरको बिउ र मेथी (मसला खाने) पाँच-पाँच तोला अन्दाजी कुटेर फाँको लगाएर पानीसँग पिउनू ।

९. गाजरको बिउ पिसेर पानीमा मिलाएर पिउनू ।

१०. इन्द्रायणको रस रुवामा भिजाएर योनिमा राख्ने गरे मासिक धर्म हुन्छ ।

## ४७. नानी नहुनेहरूलाई उपाय

आजकल नानी नहुनेहरू डाक्टरकहाँ गई किउरेट गर्दछन् । डाक्टरकहाँ किउरेट-सिवाय अन्य उपाय छैन, तर वन्ध्या हुने धेरै कारणहरू हुन्छन् ।

१. पाठेघरमा हावा भरिनु ।

२. पाठेघरमा कीटाणुहरू हुनु ।

३. पाठेघरमा मासु पलाउनु ।

४. पाठेघरमा बेसी गर्मी हुनु ।

५. पाठेघर टेड़ो हुनु ।

६. शरीर मोटो भई अथवा पाठेघरमा चर्बी (बोसो) भरिनु ।

७. अरू योनि-रोग हुनु ।

**उपरोक्त रोगहरू पत्तो लगाई औषधि गर्नु योग्य छ ।**

१. मासिक धर्म बन्द छ भने अथवा मासिक धर्म भएको १६ दिनपछि सम्भोग गरे गर्भ रहदैन ।

२. बचपनमा विवाह भएको कारणले पनि वन्ध्या हुन सक्छ ।

३. पाठेघरमा वायु भरिएको छ भने सम्भोगको पछि जाडो लागे झैं कम्प हुन्छ । हिंग, कालो तिलको तेलमा पिसेर रुवामा भिजाएर योनिमा राख्ने गर्नू ।

४. पाठेघरमा मासु बढेको भए सम्भोगपछि कम्मर दुखेको भान हुन्छ । कालो जीरा, हात्तीको नग, अण्डीको तेल तीनैवटा पिसेर रुवामा

भिजाएर योनिमा राख्ने गर्नू ।

५. गर्भाशयमा कीटाणु भए सम्भोगपछि पिडुँलामा दुखेको भान हुन्छ । हाड्डा (हर्रो), बेड्डा (बर्रो), काफल तीनैवटा साबुनको पानीमा पिसेर रुवामा भिजाएर योनिमा राख्ने गर्नू ।

६. पाठेघर (गर्भाशय) मा चिसो भए, सम्भोगपछि छाती दुखेको भान हुन्छ । यस रोगीले बोझो, कालो जीरा, अश्वगन्धा पिसेर सुहागाको पानीमा फिटेर रुवामा भिजाएर योनिमा राख्ने गर्नू ।

७. गर्भाशय जलेमा अथवा गर्मी बेसी छ भने सम्भोगको पछि टाउको दुख्छ । यस रोगीले समन्दर फल, लहसुन अलिकता नूनसँग पिसेर योनिमा राख्नू । लहसुन केही कम गर्नू । यो औषधिले पोल्छ, सहेर केही समयसम्म योनिमा राख्नू, सहन नसके त्यो रुवा निकालेर फ्याँक्नू, भोलिपल्ट जति सहन सकिन्छ, दिनहुँ केही दिन औषधि रुवामा भिजाउँदै सहन सक्नेसम्म राख्ने गरे रोगमुक्त हुइन्छ । रोग निको भएपछि सम्भोग पछाडि टाउको दुख्दैन, यसो भए गर्भ धारण हुन सक्छ ।

८. गर्भाशय बांगो भए जङ्घामा (तिघ्रामा) दुखेको भान हुन्छ । जानकारीले गर्भाशय सीधा पारिदिनुपर्छ ।

## ४८. गर्भ रहने उपाय

१. हात्तीको दाँतको धुलो दुइ आना भरी खानाले गर्भ रहन्छ ।

२. काफल कुटेर बराबर सक्खर मिलाएर ऋतुस्नान गरेपछि तीन दिनसम्म दिनहुँ एक-एक खुराक खानू ।

३. अश्वगन्धा कुटेर आना भरीको खुराक आधा तोला मह मिलाएर ऋतुस्नानभन्दा पहिला खानू ।

४. कालो धतुराको फूल पिसेर मह र घिउ मिलाएर खानू ।

५. तोरी पिसेर ऋतु हुनुभन्दा पहिला तीन दिनसम्म खानू ।

६. एक-एक हथेली (पसर) ज्वानो निकै दिनसम्म सेवन गर्नू ।

७. नागकेशर र सुपारी पिसेर केही दिन खानू ।

८. अश्वगन्धाको जरासँग चाँदीको भस्म, बाछा भएको गाईको दूधसँग खाने गरे वन्ध्याको पनि छोरा हुन्छ ।

९. ऋतुस्नान गरेको चौथा दिन शिवलिङ्गको बीज खानू ।

१०. यदि रजस्वला स्त्रीले बरको जटा गाईको घिउसँग खाए गर्भ हुन्छ ।

११. स्त्री जातिको छोरा-छोरी नहुनुमा स्त्री जातिकै मात्र दोष हुँदैन । पुरुषको पनि वीर्य पत्लापन, सुजाक आदि रोग भएको अथवा शीघ्र पतन नामर्द आदि दोष हुन्छ । मर्दलाई कुनै दोष भए उपचार गर्नु योग्य छ । धेरै पुरुष जाति हस्तमैथुनद्वारा नामर्द भएका हुन्छन् ।

## ४९. वन्ध्या बनाउने उपाय

१. धतुराको जरा कम्मरमा बाँधिराख्नाले गर्भ रहदैन ।

२. पलाश अथवा ढाकको बीजको खरानी चिसो पानीसँग खानू ।

३. सम्भोग सकिनासाथ उठेर हिडे गर्भ रहदैन ।

४. सम्भोग हुनासाथ डुस गर्नू ।

५. पाँच दिनसम्म हिंगसँग तेल खानू ।

६. करेला (तिते करेला) को रस पिउनू ।

७. मूसाको लिंड़सँग मह मिलाएर योनिमा राख्नू ।

८. खच्चड़को पिशाब र फलाम झानेको पानी मिलाएर पिउनू ।

९. हात्तीको सुकेको लिदी महमा मिलाएर खाए जन्मभरि गर्भ रहदैन, यो काम नानी भएकोले नगर्नू ।

१०. पहिला छोरा जन्म हुने खून नानी जन्मदा आएको शरीरभरि लगाउनाले फेरि गर्भ हुँदैन ।

११. पाखनवेद र मेहँदी मिलाएर हातमा लगाउनू ।

१२. ढाक (पलाश) को बीउ ऋतुकालमा तीन दिनसम्म पिसेर पानीसँग खाने गर्नू ।

१३. ढाक (पलाश) को बीजको खरानी हिंग मिलाएर खाई माथिबाट दूध पिउनू ।

१४. नौसादर (सुन उज्याल्ने) र फिटकिरी बराबर पिसेर योनिमा राख्नाले वन्ध्यापन हुन्छ । ऋतुस्नानको बाद तीन दिनसम्म लगातार गर्नू ।

१५. लोग्नेमान्छेले सहन सक्ने तातो पानीमा अण्डकोष डुबाएर एक घण्टा राखे छः महीना र चार घण्टा राखे एक वर्ष उनीबाट गर्भ रहदैन, तर पानी एकनास तातै राख्नुपर्छ ।

## ५०. नानी जन्मदा पानीसुतक भएर साह्रो परेमा

१. घोड़ाको लिदीको रस र परेबाको सुली एउटा अथवा दुइवटा पानीमा फिटेर कपड़छान गरेर खान दिनू ।
२. स्त्रीको योनिमा घोड़ाको पुच्छरको धुँवा दिनू ।
३. कालो साँपको काँचुली डढाएर धुँवा दिनू ।
४. गरम दूध आधा पाउमा एक पाउ तातो पानी मिलाएर गरम खान दिनू ।
५. अपामार्गको जरा धागोमा बाँधेर योनिपट्टि लट्काएर कम्मरमा बाँधिदिनू, तर नानी जन्मनासाथ खोलिदिनू ।
६. औंलामा केश लपेटेर मुखमा खाँदेर वाक्-वाक् गर्न लगाउनू ।
७. बासी पानीमा घरको ध्वाँसो फिटेर खुवाउनू ।
८. जसरी हुन्छ शरीर गरम हुने र छाद्नलाई वाक्-वाक् गराउनू ।

### मन्त्र

१. **मुक्ता पाशा विपाशश्च मुक्ताः सूर्ये न रश्मयः ।**
**मुक्ता सर्वभयाद् गर्भ एह्येहि मा चिर स्वाहा ।।**
यो मन्त्र च्यवन ऋषिको मन्त्र हो, यो मन्त्रले सातपल्ट पानी फुकेर दिए पानी जन्मन्छ ।

२. कसैले भालूको नाभि (लिङ्ग) घोटेर दिन्छन्, कसैले कम्मरमा

बाँधिदिन्छन्, कसैले रेलको टिकट धोएर दिन्छन् । तर अपामार्गको जरा मेरो परीक्षित दवाई हो । जरा खाने र धागोमा बाँधेर पठाउँदा नपठाउँदै नानी जन्मेको परीक्षित भएको छ ।

## ५१. नानीहरूको रोग

१. नानीहरूले आँखा चिम्म गरिराखे टाउको दुख्दै छ भनेर जान्नू ।
२. नानीहरूले खान बन्द गरे मूत्राशय दुखेको जान्नू ।
३. भुँडी करायो भने पेटको खराबी जान्नू ।
४. नानीहरू साह्रो रोए भने शरीर दुख्दै छ भनेर जान्नू ।
५. कम्ती रुँदै छ भने कम्ती दुख्दै छ भनेर जान्नू ।
६. चाम मार्‍यो भने अथवा मुट्ठी बाँधेर रोयो भने दुख्दै छ भनेर जान्नू ।
७. उभो हेरिरहे अथवा यताउति हेरिरहे टट्टी पिशाबमा खराबी छ भनेर जान्नू ।
८. घरि-घरि रोयो भने भुँडी दुख्दै छ भनेर जान्नू ।
९. दूध खाने बालकले जिब्रो निकाल्दै छ भने तिर्खा लाग्दै छ भनेर जान्नू ।
१०. नानीहरूलाई रुघा लागे श्वास नाक बन्द हुन्छ ।
११. सास फेर्दा नाकको फोहोरा चल्यो भने सास फेर्न गाह्रो हुँदै छ भनेर जान्नू ।
१२. नानीहरूको भुँडी साधारणभन्दा ठूलो भए कलेजो र फियोको खराबी छ भनेर जान्नू ।

## ५२. उपचार

१. कुटकीको चूर्ण मह र मिश्री मिलाएर चटाए जरो जाती हुन्छ ।
२. कुटकी पानीमा फिटेर नानीहरूको शरीरमा घस्नाले जरो जाती हुन्छ ।
३. धानको लावा (धान भुटेको), मुलेठी, चीनी र मह मिलाएर खुवाउनाले सेतो मासी जाती हुन्छ ।
४. बेलको जराको काँढ़ा बनाएर धानको खिल(लावा)को चूर्ण र

मिश्री मिलाएर खुवाउनाले केटाकेटीहरूले दूध खाएको उल्टी गर्न बन्द हुन्छ ।

५. कचेड़ाको फूलको पराग पिसेर महसँग मिलाएर खुवाउनाले नानीहरूको पुरानो खोकी जाती हुन्छ ।

६. सुठो, गोलमरीच, सिधेनून र गुँड़ पकाएर यसको काँडा मनतातो गरम-गरम दिनाले नानीहरूको खोकी जाती हुन्छ ।

७. कुटकी घोटेर मह मिलाएर चटाए पुरानो उल्टी हुने रोग बाडुली निको हुन्छ ।

८. आँपको कोयाको गुदी, धान भुटेको खिल दुवै सिधेनूनसँग चूर्ण बनाएर मह मिलाएर चटाए दूध उल्टी गर्ने बन्द हुन्छ ।

९. मुलेठी र पिपला पिसेर कागतीको रसमा मिलाएर चटाए दूध उल्टी गर्ने बन्द हुन्छ ।

१०. छुचुन्द्राको लिँड़, कालो दाल, हर्दी (बेसार), वेलको पात, इन्द्रजौ, शिरीषको पात यो सबै आगोमा डढाएर धुँवा दिनाले नानीहरूको राती रुने रोग बन्द हुन्छ ।

११. पीपलको बोक्रा र पीपलको पात पिसेर महमा मिलाएर लेप गर्नाले केटाकेटीको मुख पाकेको जाती हुन्छ ।

१२. काखको नानीलाई पखाला लागेमा मलद्वारमा खाने तेल लगाइदिनू ।

१३. माटोको डल्ला आगोमा पोल्नू र रातो पारेर दूधमा झानी तातो-तातै दूधले नाभिमा सेक्नू, नाभिको सुजन (सुनिएको) जाती हुन्छ ।

१४. चन्दन सुखा घोटेर पाउडर बनाई नाइटोमा छरिदिनाले केटाकेटीको नाइटो पाकेको जाती हुन्छ ।

१५. बाख्राको बड़कुला डढाएर त्यसको खरानी नाइटोमा लगाउनाले नाइटो पाकेको जाती हुन्छ ।

१६. नाइटो पल्टियो भने हरियो धनियाँ पिसेर लगाई बाँधिदिनू ।

१७. नानीहरूको मलद्वार पाक्यो भने मुलेठी (जेठीमधु) पिसेर लगाउनू ।

१८. चन्दन,सारियाशंख पानीमा घोटेर मलद्वारमा लगाउनाले मलद्वार पाकेको जाती हुन्छ ।

१९. नानीहरूलाई खोकी लागे फिटकिरी पोलेर पानीमा मिलाएर दूधको मुन्टो वरिपरि लगाएर बेलुकी त्यो दूध खुवाएर सुताइदिए खोकी निको हुन्छ ।
२०. नानीहरू तर्सिने रोग भए एक मुठी तोरी डढाएर त्यो धुँवामा नानीहरूलाई धुवाँ-माथिबाट सातपल्ट घुमाउनू ।
२१. राती नानीहरू साह्रो रोयो भने फिटकिरीको सानो डल्ला लुगामा पोको पारेर सिरानीमुनि राखिदिनू ।

## ५३. जुम्रा मार्ने उपाय

१. तीतो नीमको पातको रस कपालमा घस्नाले जुम्रा मर्छ ।
२. फिटकिरी पानीमा फिटेर घसिदिनाले जुम्रा मर्छ, तर आँखामा पार्नु हुँदैन, आँखा फुट्छ । फिटकिरीको अरू गुण पहिलो भागमा पढ्नुहोला ।

## ५४. ओठ फुटेकोमा

१. घिउमा नून मिलाएर लगाउनू । दूधको तर भए पनि हुन्छ ।
२. तरबुजाको गेड़ा पानीमा पिसेर अथवा घोटेर लगाए ओठ अथवा जिब्रो फुटेको जाती हुन्छ ।

## ५५. नानीहरूको भुँडीको रोग

१. नानीहरूलाई बदहजमी (अपच) भए पियाजको रस निकालेर खुवाउनू ।
२. नानीहरूको भुँड़ी दुखेकोमा करेलाको पातको रस हर्दी मिलाएर एक सानो चमचभरि खुवाउनू ।
३. अजीर्ण भए नीम्बूको रसमा केशर घोटेर खुवाउनू ।
४. पेटमा हावा भरिए, गधाको लिदी तताएर भुँडीमा बाँध्नू ।
५. भुँडी ढाड़िए अथवा भुँड़ीमा अपच आदि भएमा हिंग खुवाउनू, हिंग उत्तम औषधि हो ।

**नोट** - हिंगको गुण पहिलो भागमा पढ्नुहोला ।

## ५६. केटाकेटीले माटो खाएमा

१. केरा खुवाए केटाकेटीले माटो खाएकोमा लाभ गर्छ ।

## ५७. केटाकेटीले तोते (तोतला) बोलेमा

१. केटाकेटीले तोते (तोतला) बोलेमा ढुङ्ग्रे झारको ताजा २।३ वटा पात दिनहुँ पिसेर खुवाउनू । (ढुङ्ग्रे झारलाई ब्राह्मी भन्दछन् ।)

## ५८. अनुहारको दागी

१. अर्जुनको रूखको बोक्रा, सेतो घोड़ाको खुर मिलाएर मसी बनाएर लगाउनाले अनुहारको दागी हराउँछ ।
२. आँकको दूधमा हर्दी मिलाएर लगाउनाले नयाँ पुरानो चाया हराउँछ ।
३. अनुहारमा खरायोको खून लगाउनाले चाया दाग हराउँछ ।
४. मजिठो र मह मिलाएर लगाउनाले दाग हराउँछ ।
५. बरको पातको बीचको टुसा (सुइदो) र मुसुरी दाल दुवैलाई दूधमा पिसेर लगाउने गरे चाया हराउँछ ।
६. बर्ना रूखको बोक्रा दूधमा पिसेर लगाउनू । (बर्नालाई हिन्दीमा वरुण पनि भन्दछन्, बंगलामा वरुण, नेपालीमा नाम छैन ।)
७. जाइफल पानीमा घोटेर लगाउनाले चाया हराउँछ ।
८. मुसुरी दाल पिसेर त्यसमा दूध, घिउ र अलिकता कपूर मिलाएर लेप गरे दागी नीलो चाया हराउँछ ।
९. सुकेको तुलसीको पात पानीमा पिसेर लगाउने गरे कालो दाग हराउँछ ।
१०. कलमी सोडा र हरताल चार चार आनी भरी मिलाएर पाउडर झैं पिसी दुई-तीन भाग पारी एक भाग पानीमा फिट्दै लगाउने गर्नू, आधा घण्टासम्म मुख नधुनू, त्यसपछि गरम पानीले धुनू, यसरी पाँच-दश दिनसम्म गर्नाले दागको नाम रहदैन ।
११. नीमको गेडा सिरकामा पिसेर लगाउने गरे चाया हराउँछ ।

१२. परेबाको सुली पानीमा पिसेर दिनमा दुइ-चारपल्ट घस्ने गरे चाया हराउँछ ।

१३. मुसुरो दाल, निम्बूको रसमा पिसेर घस्ने गरे डन्डीफोर हराउँछ ।

१४. हर्दी, कालो तिल भैंसीको दूधमा पिसेर लगाउने गरे अनुहारको छिटा-छिटा परेको हराउँछ ।

१५. चराको सुली अथवा गौंथलीको सुली सुकेकोलाई, पिसेर अनुहारमा लगाउने गरे अथवा पाउडर झैं घस्नाले अनुहार सुन्दर हुन्छ ।

## ५९. डण्डीफोर

१. बयरको गेड़ाको भित्री गुदी, मुलेठी, कुट पिसेर पाउडर झैं बनाई सधैं मुखमा घस्ने गर्नू ।

२. जवासाको काँड़ाले सधैं मुख धुनू ।

३. बयरको सुकेको बियाँ सँधै गाईको दूधमा पिसेर लगाउने गर्नू ।

४. नरकचुर र समुद्र-झाग (फीज) पिसेर अनुहारमा लगाउने गर्नू ।

५. नरकचुर पानीमा पिसेर लगाउँदा पनि हुन्छ ।

६. निम्बू (कागती) को रसमा पहेंलो कौड़ी पिसेर मिलाउनू, सुके फेरि अर्को कौड़ी पिस्नू, पछिल्लो कौड़ी पनि पिस्दा मसला हुन्छ । बिहान बेलुकी अनुहारमा घस्ने गर्नू ।

७. शिरीषको बोक्रा, कालो तिल बराबर मिलाएर पिसेर बिहान-बेलुकी लगाउने गर्नू ।

८. मजिठो, रातो चन्दन, मसुरी दाल, लोध, लहसुनको पोटी सबै पानीमा मिहीन पिसेर बेलुकी डण्डीफोरमा घसेर सुत्नू 'बिहान मुख धुनू' डण्डीफोर हराउँछ ।

९. लोध र धनियाँ पानीमा पिसेर लगाउनू ।

१०. गोरोचन र गोलमरीच पिसेर लगाउने गर्नू । (गोरोचन भनेको गाईको पित्तको रौं हो ।)

११. तोरी, बोझो, लोध, सुठो, पिपला, गोलमरीच बराबर मिलाएर पिसी अनुहारमा लगाउने गर्नू ।

१२. तोरी, बोझो, लोध, सिधेनून पिसेर लगाउने गर्नू ।
१३. सिमलको काँड़ा दूधमा पिसेर लगाउनू । सिमललाई सेमल भनी अघि कति ठाउँमा लेखिएको छ, सो सिमल हो ।
१४. लालचन्दन र केशर पानीमा पिसेर लगाउने गर्नू ।
१५. जाइफल, लालचन्दन, गोलमरीच बराबर मिलाएर पिसेर लगाउने गर्नू ।

## ६०. असमयमा केश फुल्नु

१. भाँग्रा, सेतो तिल, चित्रेको जरा, गाईको मही मिलाएर खाने गरे असमयमा केश फुलेको जाती हुन्छ ।
२. अमला र लहसुन पानीमा पिसेर लेप गरे केश फुल्न बन्द हुन्छ ।
३. एक सयवटा झिंगा तिलको तेलमा डढाएर चालीस दिन घाममा राख्नू, त्यसपछि तेल चालेर लगाउने गरे केश फुल्दैन ।

## ६१. केश झर्ने रोग

१. कुटकी, तितो परवलको पातको रसमा पिसेर घस्ने गरे झर्न बन्द हुन्छ ।
२. कचेड़ाको रस मह मिलाएर लगाउने गरे केश झर्दैन ।
३. हात्तीको दाँतको खरानी बाख्राको दूध र रसौत मिलाएर लगाउने गरे चिल्लो भएको कपालमा (तालुमा) पनि केश आउँछ ।
४. हात्तीको दाँतको भस्म रसौत मिलाएर घिउ र दूधमा मिसाएर लगाउने गरे केश झरेर सबै नाङ्गो भएको टाउको भए पनि केश पलाउँछ फेरि झर्दैन । रसौत हिन्दी नाम हो ।
५. भाँग्रा पिसेर कपालमा घस्ने गरे केश पलाउँछ ।
६. घोड़ा अथवा गधाको खुर डढाएर खरानी बनाई खाने तेलमा मिलाएर केशमा घस्ने गरे केश झर्दै गरेको पनि जाती हुन्छ ।
७. काँचो चूनमा पानी नमिलाएको हरताल मिलाएर घस्नाले रौं (भुत्ला) झर्छ ।

## ६२. कपालमा चाया परेमा

१. कपालमा चाया परे कन्याउँदा पनि चिलाइबस्छ, यसमा एक

प्रकारको सेतो झैं पाप्रा आउँछ ।

२. कपालमा चाया परेमा आँपको कोयाको गुदी र हड्ड़ा (हर्रो) बराबर दूधमा पिसेर केशको जरासम्म लाग्ने गरी रगेड़ी रगेडी लगाउनू ।

३. पोस्तालाई दूधमा पिसेर लगाउनाले लाभ गर्छ ।

४. निम्बू (कागती) को रस चीनी मिलाएर केशको जरासम्म दली दली लगाउनू, ५।७ घण्टापछि धुनू अथवा बेलुकी घसेर सुत्नू बिहान धुनू, चाया हराउँछ ।

५. चनाको पीठो (बेसन) आधा घण्टासम्म सिर्कामा भिजाइराख्नू, त्यसपछि मह मिलाएर टाउकोमा केशको जरासम्म भेट्ने गरेर घसे चाया हराउँछ ।

६. साबुनले कपाल धोएर तेल लगाउनाले केही फरक देखिन्छ ।

७. चुकन्दरको जरा, चुकन्दरको पात लेदो बनाएर घस्नाले चाया, जुम्रा, लिखा सबै जान्छ ।

## ६३. खुट्टा मर्किएकोमा

१. खुट्टा मर्किए झट्टै उठेर अथवा कसैको सहारा लिएर हिड्नू, कारण झट्टै हिंट्दा नसा ठीकमा आउँछ, दुख्यो भनेर बसेमा जाम हुन्छ र दु:ख दिन्छ । नमूनाको लागि फुटबल खेल्नेहरूलाई हेर्नू, खुट्टा मर्के तापनि दगुर्न थाल्छन्, खुट्टा ठीक हुन्छ ।

२. मर्केकोमा नूनपानी उमाली केही मट्टितेल लगाएर त्यो तातो पानीले सेक्नू ।

३. लोहोटे घाँसको मुन्टो कुटी लगाएर बाँध्नू ।

४. भुइँचम्पा पिसेर लगाई मर्केको ठाउँमा बाँध्नू ।

५. पियाज, हर्दी, खाने तेल, चुना मिसाएर पकाई मर्केको ठाउँमा प्लास्टर गरेर बाँध्नू ।

## ६४. हड्डी भाँचिएकोमा

१. हड़चुर सबैभन्दा उत्तम औषधि हो, यसलाई खानू अनि भाँचिएको ठाउँमा लगाउनू ।

२. काँचो सिमरिक, मह, काँचो अण्डा, दूध, फिटेर खाए हड्डी चाँड़ो जोडिन्छ । हड्डीको जोड्नीमा काँचो सिमरिक पुग्छ ।
३. डाक्टरकोमा एक्सरे गरेर प्लास्टर गरे तापनि काँचो सिमरिक र हड्चुर मिलाएर खुवाउनु उत्तम औषधि हो । डाक्टरकोमा कैलसियम बाहेक अरू औषधि छैन ।
४. डाक्टर नभएको ठाउँमा पैयुँको बोक्रा पकाएर त्यसमा दर्शन ढुंगाको धुलो लगाई काम्रो बाँध्ने चलन छ । त्यसबाहेक नेपालीहरूले असल औषधि जानेको हुन्छ । भाँचिएकोना जंगली औषधि उत्तम हो ।

## ६५. मौरीको मह

१. यसको परीक्षा नगरी खाए धोका हुन्छ ।
२. असल मौरीको मह कुकुरले खाँदैन ।
३. मौरीको मह खबर कागज (अखबारी कागज) मा जति बेर राखे पनि कागज भिज्दैन, चीनीको चास्नी मिलावट भए कागज भिज्छ ।
४. खाने तेलमा सलेदो भिजाएर बत्ती बनाउनू र महमा लटपट पारेर बाल्नू, बत्ती बल्यो भने असल मह हो, नत्र होइन भनेर जान्नू । चास्नी मिलावट गरेको छ भने बत्ती चरचर गरेर बल्दैन । यो तीन प्रकारले मात्र मौरीको मह शुद्ध हो होइन थाहा लाग्छ । आजकल कतिले चीनीको चास्नी बनाएर चाका एक दुइ टुक्रा त्यसमा हालेर मह भनी बिक्री गर्छन्, त्यसकारण जाँच नगरी मह किन्नु राम्रो होइन । मह जति पुरानो हुन्छ औषधिको लागि उति उत्तम हो ।

## ६६. शिलाजीत

१. शिलाजीत अलिकता आगोमा हाल्नू, धुँवा आएन भने असल हो ।
२. शिलाजीतलाई धुँवा नभएको आगामा हाल्दा लिङ्ग झै उठे शुद्ध हो ।
३. यौटा सिन्काले एक गिलास पानीमा अलिकता शिलाजीत मिलाउनू, त्यसमा तार झैं डोरा भएर पानीमा बसे असल हो ।
४. शिलाजीतलाई शुद्ध गाईको मूत जस्तो गन्ध भए, हल्का र

कालो रङ्गको चिल्लो त्यसमा बालुवा छैन भने उत्तम हो ।

५. शिलाजीत किन्दा चारै प्रकारको परीक्षा गर्नू, तीनवटा परीक्षा ठीक भए किन्नू ।

## रत्न

रत्न नौ ग्रहको नौवटा हुन्छ । हीरा, पुखराज, पन्ना, माणिक्य, नीलम, गोमेध, लहसुनिया, मुगा, मोती (मुक्ता)। यो नौ ग्रहको रत्न पनि चिकित्सामा प्रयोग गर्नुपर्छ । जस्तै; आयुर्वेदिक, एलोपैथिक, होमियोपैथिक, यूनानी, मिश्रानी, स्वमूत्र चिकित्सा, मनोवैज्ञानिक चिकित्सा, बायोकेमिक, चुम्बक, केरोप्रोटेक्ट, मेक्रोबायोटिक, सिअस्तु, यज्ञ चिकित्सा, प्राकृतिक चिकित्सा आदिमा रत्न चिकित्सा पनि एउटा हो । रत्न चिकित्सामा हाम्रो नेपालीहरूले एकअर्काको देखासिकी र घमण्डले ढर्रा देखाउन रत्न धारण गरिएको देखिएको छ । रत्न लगाउँदा उनीहरूलाई तडितुमडी बनाएको, गहना खोलेर बेच्नुपर्ने पारेको, कसैलाई रोग लागेको यही रत्नले हो भन्ने थाहा हुँदैन । यसकारण यस विषयमा केही ज्ञान होस् भन्ने हेतुले यहाँ छोट्करीमा वर्णन गरेको छु, ज्योतिषीले रत्न धारण गर्न लगाउँदैमा पाँच पैसामा नबिक्ने मोती रत्न हजार-हजार दिएर किन्नु हुँदैन ।

## १. हीरा

१. यो रत्न शुक्र ग्रहको हो । सेतो, नीलो, रक्तनील आभायुक्त चमकदार, कुनै दाग, दोष नभएको हुनुपर्छ । हीरा चम्कदा इन्द्रेणी झैं रङ्ग देखिन्छ । दोषी हीरा धारण गरे लाभको सट्टामा उल्टा हानि हुन सक्छ । दोष हेर्न आईगिलास (सानु चीजलाई ठूलो देखिने) ऐनाले हेर्नुपर्छ । यसरी हेर्दा दोष सजिलै देखिन सक्छ ।

२. **यव दोष-** यव भनेको जौ हो । जौंको झैं चिह्न हीरामा छ भने त्यो हीरा सित्तैमा पाए पनि धारण गर्नु हुँदैन । सेतो यवको चिह्न छ

भने यसले सुन सम्पत्ति नाश गर्छ । रातो यवको चिह्न भए पशु-धन नाश गर्छ । पहेंलो यवको चिह्न भए वंशलाई नाश गर्छ । कालो जौंको चिह्न भए धनको नाश गर्छ ।

३. **तार दोष-** मसिनो रेखा झैं देखिन्छ भने त्यसले मनमा अशान्त गर्छ ।

४. **छाल दोष**- छिल्का उत्रे झैं देखिने हीरा छ भने शरीरको शक्ति ह्रास हुन्छ ।

५. खोक्रो देखिन्छ भने अनेक सामाजिक, आर्थिक, राजनैतिक आपत ल्याउँछ ।

६. दाग छ, चमक छैन भने मैला रेखा, टीका, केशको दाग झैं छ भने यो सब आपत ल्याउने हुन्छ, चिन्ता भ्रम आदि ल्याउँछ ।

७. हीरामा खाल्डो परेको कोत्रे छ भने रोग उत्पत्ति गर्छ ।

८. हीरा शुक्र ग्रह कुण्डलीमा मंगल तथा शनि रोग या शुक्र-राहु सूर्य योगमा या कुण्डलीमा २,४,६,८,१०,१२ स्थानमा शुक्र स्थित छ भने या पंचम भावमा विषम या तुलाको शुक्र भए त्यो ग्रह-शान्तिको लागि हीरा धारण गर्नू ।

९. हीरा अष्टकोणको एक आनी भरीको ओजनको सुनको औंठीमा जडेर हातको कान्छी औंलामा धारण गर्नू । पौष महीनाको शुक्रवारको दिन पारेर लगाउनू ।

## २. पन्ना

१. **असल पन्ना-** हरियो पित्त वर्णको हुन्छ । (हरियो पातको रङ्गको हुन्छ) सूर्यको किरणमा सेतो लुगामा राखे लुगाको रङ्ग हरियो देखिन्छ ।

२. जाल-दोष-पन्नामा जाल झैं देखिन्छ भने अथवा अभ्रक झैं अथवा मधुरो छ भने, कुरकुरे छ भने यो पन्नाले रोग उत्पत्ति गर्छ ।

३. कोत्रे भए हतियारको चोट लाग्छ ।

४. चिरिएको झैं छ भने अथवा दुइ रङ्ग देखिन्छ भने पितृको सुख नाश गर्छ ।

५. चमक नभएको अथवा कालो दाग छ भने आमा-बाबुलाई हानि गर्छ ।
६. सेता छिटा छ भने मनमा अशान्ति गराउँछ ।
७. सुनौलो रङ्ग झैं देखिन्छ भने मनमा अशान्ति गराउँछ ।
८. पन्ना बुध ग्रहको रत्न हो । बुध, कन्या, मिथुन, राहु या शनि-सँग कुण्डलीमा ४, ८, १२ भावमा अशुभ ग्रहको दृष्टिमा निर्बल या नीचो भएको छ भने बुधको शक्ति बढाउनु छ भने यो रत्न धारण गर्नुपर्छ ।
९. अश्लेषा, जेष्ठा, रेवती नक्षत्र अथवा आर्द्रा नक्षत्रमा बुधको हीरामा एक आनी भरीकोदेखि दुइ आनीसम्मको 'सम्बुल' चारैपट्टि घाट भएको औंठीमा जडेर जुन हात बेसी चल्छ त्यो हातको बीच औंलामा लगाउनू । हार लगाउनेवालाले जुन हात बेसी चल्छ त्यो हातको पाखुराम लगाउनू । फाल्गुनी, अश्लेषा, जेष्ठा, रेवती या आर्द्रामा धारण गर्नू ।

## ३. पुखराज (पुष्पराज)

१. असल पुखराज वजनदार (गह्रौं), चिल्लो, पानीदार, पहेंलो रङ्गको हुन्छ । भित्तामा पहेंलो किनार या कठचम्पाको रङ्गको हुन्छ ।
२. चिर दोष-रेखा छ भने चोरको डर गराउँछ ।
३. आभाहीन निस्तेज छ भने बन्धुहरूसँग झगडा गराउँछ ।
४. दूधको रङ्ग झैं मिसिएको छ भने चोट लगाउँछ ।
५. अभ्रखी-अभ्रख झैं भए रोग उत्पत्ति गराउँछ ।
६. जाल-दोष-जाल झैं देखिन्छ भने भुँडीको रोग हुन्छ ।
७. श्याम सेतो-श्याम अथवा सेतो छिटा देखिन्छ भने पशु मार्छ ।
८. रातो थोपा (छिटा) भए धन-धान्य नाश गर्छ ।
९. गढ्डा (खाल्डो) अथवा छिटा भए चिन्ता फिक्री गराउँछ ।
१०. कुण्डलीमा गुरुसँग सूर्य, राहु या केतु या शनि छ भने दशदोषी पुखराज पनि उत्तम हुन्छ, दोष लाग्दैन । चन्द्र, शुक्रको युतिमा सेतो; चन्द्र, मंगलको युतिमा रातो छिंटा भएको पुखराज पनि

उत्तम (शुभ) हुन्छ ।

११. पुखराज बृहस्पतिको रत्न हो । बृहस्पति मकर[illegible] सूर्य, राहु योग भए अथवा गुरु पञ्चमेश भएर छैटौं भाव अथवा गुरु, शुक्र, बुध योग भए पुखराज धारण गर्नू । पुखराज पुष्य नक्षत्र, शुभ योग, मङसिर मासमा सूर्य अस्तको एक घण्टा पहिले सवा रत्तिको औंठीमा धारण गर्नू ।

## ४. माणिक्य

१. **उत्तम माणिक्य-** यसको रंग रातो हुन्छ । बिहान सूर्यको किरण झैं अरुणोदय झैं घामको उज्यालोमा देखिन्छ, हातमा लियो भने हथेलीमा (हत्केलामा) चारैपट्टि कालिमा देखिन्छ ।

२. यो रत्न आभाहीन भए भाइलाई दुःख हुन्छ ।

३. दूधको रङ्ग झैं देखिए पशु नाश गर्छ ।

४. जाल चिह्न जालो झैं भए धन र स्थान नष्ट गराउँछ या घर सर्नुपर्छ ।

५. दुई रंगको झैं देखिन्छ भने धन, स्थान नाश गर्छ ।

६. धूम्रवर्ण धुँवाको रंग झैं देखिन्छ भने बिजुली लाग्ने डर हुन्छ ।

७. सीधा रेखा माणिक्य फुट्ला झैं भए शस्त्रघात, भीरु (डरछेरुवा) बनाउँछ अथवा कलंक लगाउँछ ।

८. मैला माटोको रङ्ग देखिए भुँडीको रोगी र छोरामा बाधा पुऱ्याउँछ ।

९. कालो दाग भएमा मनमा उदासी, सेतो दागले बदनाम र महको रंगको दागले आयु धन र प्राण हर्छ ।

१०. खाल्टो अथवा कोत्रे भए शरीर दुर्बल गराउँछ ।

११. सजिलै फुट्ला झैं, अभ्रख झैं छ भने मृत्युकारक हो ।

१२. यो रत्न सूर्य ग्रह सम्बन्धित हो । सूर्य तुलाको नीचो छ, कुण्डलीमा ६, ८, १२ स्थानमा छ, सूर्य दोस्रो अथवा शनिको बाह्र स्थानमा छ, पञ्चम स्थान रिक्त छ या तुला शनिको सूर्य पाँचौं छ, सूर्यलाई शनिको दृष्टि छ भने माणिक्य धारण गर्नू । उत्तम माणिक्य गोल, षट्पहलु या बाह्रपहलुवाला औंठीमा जड़ेर अथवा भोज-बन्ध

बनाएर या माला बनाएर चैत महिनाको पुष्य नक्षत्रमा रविवारको दिन धारण गर्नू । औंठी लाउनुपरे अनामिका औंलीमा लगाउनू ।

## ५. नीलम

१. असल नीलम एकै आभायुक्त, गह्रौं, स्निग्ध, स्वच्छ, पिण्डको आकृतियुक्त, चिल्लो, प्रभावान् हुन्छ ।

२. नीलमको दोष (१) हरियो आभाको, (२) डोरा भएको, (३) दूध रंगको, (४) फुटेको जस्तो, (५) दुई रंगको, (६) जाल भएको, (७) छेड़ भएको यो सबै दोष भएको नीलम मृत्युकारक हो ।

३. यो नीलम शनि ग्रहको हो । कुण्डलीमा शनि ग्रह मेष या मकरको पाँचौं या शनि चन्द्र योग कहीं पनि भए या शनि सूर्य भए तथा शनिले सूर्य देख्छ या सूर्यले शनि देख्छ, अशुभ साढेसाती या अढइया भए नीलम धारण गर्नू ।

४. नीलम धारण गर्दा होशियार हुनुपर्छ । नत्र लाभको बदला चौपट पार्छ । धारण गर्नेहरूले पूरा नियम पालन गर्नु आवश्यक छ । नीलो रंगको नीलम गोलाकार अथवा रथको समान हुन्छ । असार मासको शनिवार रोहिणी नक्षत्रमा चाँदीको औंठीमा बीचको औंलामा धारण गर्नू । आफ्नो हातको एघार हात लामो रेशमको धागो बाटेर कालो लुगामा बाँधेर गलामा लगाउनू ।

५. नीलम धारण गर्दा शनि दशामा कालो लुगामा बाँधेर सूर्य अस्तको दुइ घण्टा अगाडि नीलम बाँध्नू । यसरी नै तीन दिनसम्म दिनहुँ चालीस मिनट पाखुरामा विचार गर्नू । केही लाभ भएको देखियो भने नीलम धारण गर्नू, नत्र नलगाउनू, जबरजस्ती धारण गरे यसले उठिबास लगाउँछ ।

## ६. गोमेध

१. असल गोमेध सफा पारदर्शक, गाईको मुख झैं पहेंलो रंगको हुन्छ । तलप्रान्त समान, चम्कने, चिल्लो, निर्मल, मञ्जुल तथा

आकर्षक हुन्छ ।
२. रुखो भए मनुष्यको पथभ्रष्ट गराउँछ ।
३. पाप्रा झैं भएकोले डाबर-डाबर गराउँछ ।
४. अभ्रखी छ भने चोरले धन हरण बर्छ ।
५. खाल्डो अथवा खोपिल्टा भएकोले पशु र धन नाश गराउँछ ।
६. चर्केको (दाग) भएको गोमेधले सर्वनाश गर्छ ।
७. श्याम दागीले स्त्रीको हानि र अरू प्रकारको दागीले स्थानहानि गराउँछ ।
८. जाल झैं भएकोले शरीरमा अनेकौं रोग गराउँछ ।
९. आकर्षक नभए लकुवा (पक्षाघात) गराउँछ, अथवा आधा अङ्ग मार्छ ।
१०. दुइ रंगको भए बाबुलाई हानि गराउँछ ।
११. गोमेध शनिको पछि राहुको राश्यन्तर १८ महीना हुन्छ । यदि कुण्डलीमा लग्नमा नीचको राहु या सूर्य चन्द्र मंगलमा राहुको युति भए उसले गोमेध धारण गर्नू । यसो गर्नाले हिंसक जानवरको डर हुँदैन । यसलाई मुखमा राखे खून बहन बन्द हुन्छ । एक आना भरीको गोमेध अश्लेषा, जेष्ठा, रेवती यो नक्षत्रमा बुध अथवा गुरुवार यही ग्रहको होस् अथवा यही ग्रहको नवमांशमा साँझ परेको दुई घण्टापछिसम्म मार्गशीर्ष मासमा धारण गर्नू ।

## ७. लहसुनिया

१. यो केतु ग्रहको रत्न हो । यो अनेक रंगको हुन्छ । जसरी वर्षामा आकाशको बादल सूर्यको किरणले अनेक प्रकारको देखिन्छ उसरी नै लहसुनिया हुन्छ । यदि पित्ताभावाला लहसुनिया (वैदूर्य) त्यसमा सेतो धर्का, पतला लामो रेखा सीधा भए उत्तम लहसुनिया हो । यदि इन्द्रनील या मरकत (पन्नाको नग)मा लहसुनियाको लक्षण पाए अति उत्तम हो, त्यो धारण गर्नु उत्तम हुन्छ ।

२. केतुको अन्तर-दशामा एक आनी भरीको लहसुनिया चाँदीको लटेकमा शनिवारको दिन धारण गर्नू । यो धारण गर्नेले नशीला पदार्थ, धूम्रपान, सुर्ती, सिगरेट, जाँड, रक्सीदेखि बाँच्नुपर्छ, खानु हुँदैन।

३. यो केतु ग्रह कुण्डलीमा स्थित अनुकूल छैन भने यो रत्न धारण गर्नू । केतु ग्रह जहाँ बस्छ, त्यसको फल नष्ट गर्छ । अथवा जहाँ देख्छ त्यसको फल कम गराउँछ । राहुको स्वभाव ठीक त्यसको विपरीत हुन्छ ।

## ८. मुँगा

१. उत्तम मुँगाको रङ्ग सिन्दूर जस्तो श्वेतवर्ण पित्तमा युक्त, हेर्नुमा सुन्दर देखिन्छ ।
२. दुई रंगको, टुटफुट भएको, खाल्डाखुल्डी भएकोले सुख-सम्पत्ति नष्ट गर्छ ।
३. कालो धब्बा भएको मुँगाले मृत्यु-समान कष्ट दिन्छ ।
४. सेतो छिटा भएको मुँगाले सुख-सम्पत्ति भए तापनि भोग गर्न दिदैन ।
५. घुना अदर्शनीय (देख्नुमा राम्रो नभएको) ले शरीरमा दर्द र टाउको आधा दुख्ने रोग हुन्छ ।
६. चोट आएको अथवा चिरिएको दागी भएकोले शस्त्रको चोट लाग्ने डर हुन्छ ।
७. मुँगा मंगल ग्रहको रत्न हो । मंगलको दशा, अन्तर-दशामा या दोस्रो प्रकुपितावस्थामा भए मुटु-सम्बन्धी रोग हुन्छ । यदि कुण्डलीमा मंगल १, ४, ७, ८, १२ या पाँचवाँ भावमा मेष राशि या वृश्चिक-राशिको भए, मंगल सूर्य एकसाथ छ या कर्कट मंगल भए मुँगा धारण गर्नू ।
८. मुँगालाई डेढ आनी भरीको चाँदीको औंठीमा जडेर लगाउनू । यदि हारमा लगाउनुपरे सिन्दूरी रंगको मालामा चाँदीको लकेटमा जडेर लगाउनू । तर शरीरलाई स्पर्श हुने गरेर यानि शरीर छुने गरी लगाउनू । मुँगा मंगलवार या गुरुको होरामा मंगलकै होरा नवांशमा धारण गर्नू । यो रत्न मंगलले फल दिदैन त त्यस बेला धारण गर्नू ।

## ९. मुक्ता (मोती)

१. उत्तम मोती गोलो चिल्लो निर्मल चन्द्रमाको समान कान्तिमान्

पत्ला केश झैं छड़ भएको हुन्छ ।

२. यदि मोतीमा तीन अथवा एक अर्धगोलाकार रेखा छ भने क्रमश: सौभाग्यनाश तथा अपयश (अपजस) गराउँछ ।

३. त्रिकोण (तीनकुने) भए भाग्यनाश गराउँछ ।

४. गोलो नभएर लाम्चे-लाम्चे छ भने मूर्खपना ल्याउँछ ।

५. फुटेको मोती लगायो भने उद्योगहीन (उन्नति गर्न नसक्ने) गराउँछ ।

६. बिना आभावालाले वैभव (महत्त्व) नष्ट गर्छ ।

७. रातो, कालो, गुलाबी छिटा भए दु:खी बनाउँछ ।

८. कागको खुट्टा जस्तो चिह्न भएको छ भने मनोवृत्ति असत्य कार्यपद्धि गराउँछ ।

९. माछाको आँखा झैँ दाग भए पुत्रनाश गराउँछ ।

१०. सीपीको आभावालाले कुष्ठ-रोग उत्पत्ति गराउँछ ।

(क) मोती चन्द्र ग्रहको रत्न हो । यदि कुण्डलीमा चन्द्रमा ६, ८, १२ भावमा छ भने पाप ग्रहको राशिको, दृष्टिमा नीचको पाप ग्रहसँग छ भने त्यो व्यक्ति निस्तेज रहन्छ, स्वास्थ्य राम्रो हुँदैन । स्नायिक दर्द (दुखाइले) पीड़ित रहन्छ । कार्यक्षमताको अभावमा दिवासपना देख्छ, त्यस्तो मान्छेले मोती धारण गर्नुपर्छ ।

(ख) चन्द्रको दशा, चन्द्रकै होरा, चन्द्रवार एक आनी भरीको मोती गला, भुजा, पाखुरा अथवा औंलीमा धारण गर्नू । चाँदीमा लगाएर उपरोक्त दशामा लगाउनु उत्तम हो ।

(ग) वृषभ या कर्कट राशिको चन्द्र, पुष्य नक्षत्र, रोहिणी या श्रवण नक्षत्रमा धारण गर्नू ।

उपरोक्त रत्नको दोष राम्रो हेरेर चिनेर मात्र धारण गर्नू, यदि दोष नजानी नचिनी धारण गर्नाले माथि रत्नदोषमा लेखिएका अनेकौं आपत्ति आइलाग्छ । यी रत्नहरू कतिले लगाएको, कतिले नकल पार्न घमण्डले लगाएको देखिन्छ । यसकारण यो रहर र नक्कल पार्न लगाउनु असल होइन । यसको दोष हेर्ने ऐना रत्नविक्रेताको पसलॉ पाइन्छ । राम्रो हेर जाँच गरेर मात्र लगाउनु योग्य छ । कतै दोषी रत्नहरू जानकार ठाउँमा नबिकेकोले

कोही ठाउँमा सस्तोमा ल्याएर विक्रेताहरूले धेरै दाम उठाएको पनि देखिन्छ । जानकार ठाउँमा दश रुपियाँमा नबिकेको रत्न अन्जान मानिसहरूलाई दश हजारमा बिक्री गरिएको पनि देखियो । यस विषयमा राम्रो होशियार रहनुहोला ।

## रत्नको रंग, कारण र प्रभाव

सूर्यको किरणमा सात रङ्ग मुख्य मानिएको छ । सो रत्नमा सम्बन्ध छ, साथै ग्रह र धातुको सम्बन्ध यस प्रकार छ । कुन ग्रहको उपद्रवमा कुन धातुसँग धारण गर्नू-

| ग्रह | रत्न | धातु |
|---|---|---|
| मंगल | माणिक्य (Ruby) | ताँबा या सुन |
| सूर्य | मुक्ता (Pearl) | चाँदी |
| बृहस्पति | विद्रुम (Carat) | ताँबा |
| बुध | मरकत (Emerald) | सुन |
| केतु | पुष्पराज (Moonstone) | चाँदी या ताँबा |
| शनि | वज्र (Diamond) | हीरा |
| राहु | नीलम (Sappdire) | सुन या राँगा |
| चन्द्र | गोमेध | सुन |
| शुक्र | वैदूर्य | सुन |

कारण :

१. माणिक्य सूर्यको प्यारो हुन्छ । सूर्य प्रसन्न गराउने यो रत्न हो ।
२. मोती चन्द्रमा प्रसन्न गराउन धारण गरिन्छ ।
३. विद्रुम (मुगा) मंगललाई खुशी गराउन धारण गर्नू ।
४. मरकत (पन्ना) बुध खुशी गराउन धारण गर्नू ।
५. पुष्पराज बृहस्पति खुशी गराउन धारण गर्नू ।
६. वज्र (हीरा) शुक्रं ग्रह खुशी गराउन धारण गर्नू ।
७. नीलम शनि दशाको प्यारो हुनाले धारण गर्नू ।
८. वैदूर्य मणि केतु ग्रह प्रसन्न गराउन धारण गर्नू ।

## रत्नको रंग

| | | | |
|---|---|---|---|
| माणिक्यबाट | प्रकाशित | रङ्ग - | रातो |
| विद्रुम | ,, | ,, | पहेंलो |
| मरकत | ,, | ,, | हरियो |
| पुष्पराज | ,, | ,, | आशमानी |
| वज्र (हीरा) | ,, | ,, | नीलो |
| मुक्ता | ,, | ,, | नारंगी (सुन्तला) |
| नीलम | ,, | ,, | बैजनी (भन्टे) |

माणिक्य इन्द्रगोपको समान लाल (रातो) कान्तिवाला, मुक्ता सुन्तलाको रङ्ग बाहेक रक्त, पित्त, श्वेत अथवा पहेंलो वर्णको पनि हुन्छ । मरकत मुजुरको प्वाँखको रंगको हुन्छ, पुष्पराज सुनको वर्ण झैं, वज्र तारा जस्तो, नीलम बैंगुनी भनेको मेघ झैं हुन्छ । यो बाहेक आठवाँ गोमेध रातो पहेंलो मिलेको झैं, नौवाँ वैदूर्य मणि बिरालोको आँखा जस्तो रेखा भएको हुन्छ ।

यसको रंग टल्कदा देखिने रंग 'प्रिज्म' रत्न हेर्ने ऐनाद्वारा मात्र छुट्याउन सकिन्छ ।

## रत्नको प्रभाव

१. सूर्य सात रंग-मिश्रित गरम हुन्छ । २. चन्द्रमा चाँदी जस्तो रंग शीतल हुन्छ । ३. मंगल ताँबा झैं रंगको रातो गरम हुन्छ । ४. बुध हरियो नपुंसक हो । ५. बृहस्पति सूनौलो रंगको चर्बीयुक्त हुन्छ । ६.शुक्र निर्बल शक्ति-वर्धक हो । ७. शनि आसमानी अभाको नीलो लुलो हो । ८. राहु पृथिवीको रंग झैं कालो हुनाले अर्कोकोबाट प्रकाशित हुने र आकर्षित शक्तिवाला हो ।

९. केतु पृथिवीको छायाँ झैं हल्का आसमानी (आकाशे) रंग अरू ग्रहबाट प्रकाश लिएर चन्द्रमालाई दिने ।

यस बाहेक कुन ग्रहको लागि कुन रत्न धारण गर्दा कुन कुन रोगमा लाभ पुऱ्याउँछ, सो सबै यहाँ दिने आवश्यक न-

हुनाले लेखिएन । त्यसर्थ पाठकवर्गसँग क्षमा याचना गर्छु ।

रत्नको बाहेक लुगाको रङ्ग कुन रोगीले कुन रङ्गको लुगा लगाउनु यो पनि प्रभाव पार्छ भन्ने धन्वन्तरि महाराजको र शास्त्रको भनाइ छ । त्यस्तै रत्नको रङ्ग होइन, त्यसबाट प्रकाश हुने रङ्गलाई मानिएको छ ।

## रत्नले रत्नको प्रभाव नष्ट गर्छ

१. माणिक्य रत्न सूर्यको प्यारो हुनाले सूर्य प्रसन्न गराउन धारण गर्नू ।
२. मोती चन्द्रमाको प्यारो हुनाले चन्द्रलाई खुशी गराउन मोती धारण गर्नू । त्यसरी नै अन्य ग्रहमा; जस्तै-
३. मुँगा मंगलको लागि । ४. पन्ना (मरकत) बुधको लागि ।
५. पुष्पराज बृहस्पतिका लागि । ६. वज्र (हीरा) शुक्र ग्रहको लागि ।
७. नीलम शनि ग्रहको साह्रै प्यारो हुनाले शनिको लागि ।
८. गोमेध राहुको लागि ।
९. वैदूर्य मणि केतुका लागि धारण गर्नू ।

उपरोक्त ग्रहहरू खुशी पार्ने रत्न धारण गर्नू । तर रत्नको प्रभाव रत्नले नै नाश गर्छ । पुष्पराजलाई चन्द्रकान्त मणि पनि भन्दछन् । जस्तै-

लालमाणिक्यका विरोधी रङ्ग मरकत हरियो हो । यसकारण माणिक्यको प्रभाव मरकतले नष्ट गर्छ । यसकारण यी दुई एक अर्काको विरोधी हुन्, दुवै रत्न एकसाथ लगाउनु हुँदैन ।

आसमानी (आकाशे) पुष्पराजको विरोधी रङ्ग मुक्ताको नारङ्गी (सुन्तला) रङ्ग हुनाले पुष्पराजको प्रभाव मुक्ताले नष्ट गर्छ ।

पहेंलो मुँगाको प्रभाव विरोधी बैगनी रङ्ग नीलम हो, मुँगाको नीलमले नष्ट गर्छ ।

नीलो हरियो रङ्गको विरोधी मुँगाको हो, हीराको प्रभाव मुँगाले नष्ट गर्छ अर्थात् मुँगा र हीराको मेल हुँदैन ।

कतिले जुनसुकै रत्न धारण गरेको देखिन्छ, यसो गर्नु उचित होइन ।

यी रङ्गहरू हेर्न प्रिजमद्वारा (रत्न हेर्ने द्वारा) मात्र यसले दिएको प्रकाश थाह लाग्छ ।

यस बाहेक रत्नहरूलाई भस्म बनाएर औषधिमा पनि प्रयोग गरिन्छ ।

इति •